चाणक्य वा विष्णुगुप्त वा कौटिल्य विरचित-

# ॥ चाणक्यसूत्राणि ॥



सङ्कलन तथा नेपालीमा भावानुवाद : मोहन प्रसाद सापकोटा

## दुई शब्द

कौटल्य गोत्रका ऋषि चणकका पुत्र विष्णुगुप्तलाई चाणक्य वा कौटिल्यका नामले पनि चिनिन्छ । पश्चिम जगततिर सिकन्दर वा अलेक्जेण्डरको प्रभुत्व हुँदा यतातिर कौटिल्य प्रसिद्ध थिए । उनको समय आजभन्दा करिब डेढ हजार वर्ष अघिको हो भनी मानिएको छ ।

कौटिल्यका लघुचाणक्य, वृद्ध चाणक्य, चाणक्यनीति, चाणक्य राजनीतिशास्त्र, चाणक्य सूत्र आदि ग्रन्थ पाइन्छन् । यी सबै ग्रन्थ सनातन पूर्वीय दर्शनको सारलाई परिमार्जन सहित सङ्कलन गरी लेखिएका ग्रन्थहरू हुन् ।

यो ग्रन्थमा अरु कुरा पनि समावेश छन् तर विशेषतः राजनैतिक शिक्षा दिइएको छ । यसै ग्रन्थ भित्रका सूत्र यहाँ राखेर वा अन्य ग्रन्थका कुरा राखेर भूमिका लम्ब्याउनुको कुनै तूक छैन । महाभारतको राजनीति मात्र राजनीति हो भनेर विनाशतिर गइरहेको वर्तमान राजनीतिलाई सम्हाल्न पुग्ने खालका अनेकौं गहकिला र घतलाग्दा कुरा यसमा छन् ।

सबै सूत्रको नसके पनि केही सूत्रको नेपाली धरातलसँग तुलना गर्दै कसैकसैलाई च्वास्स हुने गरी चोटिलो पाराले व्याख्या गरेको छु ।  सत्य कुरा कसैलाई खुशी पार्नका लागि लेखिँदैनन् ।

पन्ध्रौं शताब्दीतिर नै यसको अंग्रेजीमा अनुवाद भएर पश्चिमतिरकाले पढि सकेको देखिन्छ । हामी भने पछाडि परिरहेका छौं । उनीहरुले जे पढी जे कुरा छाडे हामी त्यसैलाई यहाँ नयाँ भनी सिकिरहेका छौं ।

अन्धाधुन्ध नेता बन्ने र बनाउने संस्कारलाई परिमार्जन गर्न यो ग्रन्थ अत्यन्त उपयोगी हुन्छ भन्ने विश्वास लिएको छु । जानी नजानी भएका गल्तीलाई सुधार्न सहयोग गर्नु हुनेनै छ ।

२०७९।२।६।६, नेपाल

sapkotamps731@gmail.com

ॐ

**श्रीगणेशाय नमः**

## ॥ चाणक्यसूत्राणि ॥

### सुखस्य मूलं धर्मः ॥१॥

सुखको मूल नै धर्म (नीतिसम्मत वा मानवोचित कर्तव्य पालना) हो ।

### सा श्रीर्वोऽव्यात् ॥

त्यो परं सम्पत्ति दायक ऐश्वर्यकी अधिष्ठात्री देवी राज्यश्रीले राज्यका अधिकारी हजुरहरूलाई असल बुद्धि दिएर रक्षा गरुन् ।

### धर्मस्य मूलमर्थः ॥२॥



धर्मको मूल अर्थ (धन) हो ।

### अर्थस्य मूलं राज्यम् ॥३॥

(स्थिर) राज्य नै अर्थको मूल (आधार) हो ।

### राज्यमूलमिन्द्रियजयः ॥४॥

राज्य (धनको स्थायित्व सहितको सुदृढ राज्य) को आधार (त्यसलाई चलाउनेले गर्ने) आफ्ना इन्द्रियमाथिको विजय हो ।

### इन्द्रियजयस्य मूलं विनय ॥५॥

विनय (नम्रता) नै इन्द्रियलाई जित्ने आधार हो ।

## विनयस्य मूलं वृद्धोपसेवा ॥६॥

वृद्ध (ज्ञानवृद्ध) को सेवा नै विनय (नम्रता) को आधार हो ।

## वृद्धसेवाया विज्ञानम् ॥७॥

वृद्धको सेवागरी तिनबाट ज्ञान दुहुनू ।

## विज्ञानेनात्मानं संपादयेत् ॥८॥

आर्जित ज्ञानले आफूमा निखार लेराउनू (आत्मालाई शुद्ध बनाउनू) ।

## सम्पादितात्मा जितात्मा भवति ॥९॥

सिकेको ज्ञानले आफूमा निखार लेराउने व्यक्ति नै जितेन्द्रिय हुन सक्दछ ।



## जितात्मा सर्वार्थै संयुज्येत ॥१०॥

जितेन्द्रिय व्यक्ति (शाषक) सबै सम्पत्तिले सम्पन्न भई बस्नू ।

## अर्थसंपत् (स्वामीसंपत्) प्रकृतिसंपदं करोति ॥११॥

राज्यकोषमा वृद्धि भए स्वाभाविकरूपमा प्रजाको पनि आर्थिकस्तर बढ्दछ ।

## प्रकृतिसम्पदा ह्यनायकमपि राज्यं नीयते ॥१२॥

प्रजाहरू नीतिसम्पन्न (वा पद्धतिमा चलेका) छन् भने कुनै कारणले राजा (वा त्यो गुण भएको राजनेता) को अभाव हुँदा पनि राज्य राम्ररी परिचालन हुने गर्दछ ।

व्याख्या: (राजा (वा कुनै नेता) नभएर राज्य अड्कँदैन) । चाणक्यका पालामा पनि जनताले भ्रममा बस्नु हुन्न, विवेकशून्य भई कसैको आदेशमा चल्ने गर्नु हुन्न र विवेकशील हुनुपर्दछ भन्ने मान्यता थियो । शाषक को छ ? वा शासन व्यवस्था के छ ? त्यो महत्वपूर्ण कुरा होइन, पद्धति महत्वपूर्ण कुरा हो, धर्म्मसम्मत् नीति महत्वपूर्ण कुरा हो । नेपालमा हामी नेपालीहरु २००७ साल यता आजका मितिसम्म पनि शाषक वा शासन व्यवस्थालाई प्राथमिकतामा राखिरहेका छौं, पद्धतिलाई तिरस्कार गरिरहेका छौं, त्यसैले अनेकौं परिवर्तन पश्चात् पनि उपलब्धी शून्य जस्तै भइरहेको छ । प्रजाहरुले स्वविवेकको प्रयोग गर्न नपाउनु वा प्रयोग गर्ने अवस्था आउन नदिनु भनेको प्रकारान्तरले त्यो दास प्रथा नै हो । शारीरिक वा मानसिक दासप्रथा शासन व्यवस्था होइन, यस्ले देशीविदेशी गैरकानूनी संगठन, तस्कर, माफिया आदिलाई बलियो बनाइ रहेको हुन्छ । जनताले स्वविवेक प्रयोग गर्ने वातावरण नबन्दासम्म पद्धति कुनै हालतमा पनि बस्दैन, बस्न सक्दैन । दास मानसिकतामा विवेकको जन्म नै हुँदैन, विवेकको जन्म नै नभएपछि प्रयोग गर्ने कुरा पनि भएन । देश अस्थिर छ, किन कि जनता राजनैतिक दास हुन रुचाउने भएका छन् ।



## प्रकृतिकोपः सर्वकोपेभ्यो गरीयान्॥१३॥

आम नागरिकले गर्ने प्रकृतिप्रतिको जनआक्रोश वा अविश्वास सबै खाले अन्य आक्रोश वा अविश्वास भन्दा खतरनाक वा भयावह हुन्छ ।

व्याख्या: चाणक्यको यो सूत्रको अर्थ जान्न पहिला प्रकृतिको अर्थ बुझ्न आवश्यक हुन्छ । स्वाम्यमात्यौ पुरं राष्ट्रं कोषदण्डौ सुहृत्तथा । सप्त प्रकृतयो ह्येताः सप्ताङ्गं राज्यमुच्यते॥-मनुस्मृतिः (९।२९४) मनुस्मृतिमा भनिएको छ कि-(१) राज्यको प्रमुख व्यक्ति, (२) मन्त्री, (३) किल्ला वा सैनिक सङ्गठन, (४) देश एवं प्रदेश, (५) राज्यको ढुकुटी, (६) दण्ड विधि (कानूनी प्रावधान र अवस्था) र (७) देशका मित्रशक्ति-यी सात कुरालाई "सात प्रकृति" भनिन्छ । यी सात अङ्ग (वा प्रकृति) को समष्टि वा एकत्रितरूपलाई नै "राज्य" भनिन्छ । यी सात कुराप्रति जनतामा कोप (अविश्वास वा आक्रोश वा उदासीनता वा अति निर्लिप्तता) भयो भने कुनै पनि व्यवस्था शान्तिपूर्ण ढङ्गले चल्दैन ।

## अविनीतस्वामिलाभादस्वामिलाभः श्रेयान् ॥१४॥

अविनीत (नीतिहीन, सत्यहीन, कर्महीन, अन्यायी, अत्याचारी, स्वार्थी, परछिद्रान्वेषी, मत्सरी आदि दुर्गुण भएको) व्यक्तिलाई राजा (वा कार्यकारी प्रमुख) बनाउनु भन्दा कसैलाई पनि राजा (वा कार्यकारी प्रमुख) नबनाउनु देशको हितमा हुन्छ ।

## सम्पादात्मानमन्विच्छेत् सहायवान् ॥१५॥

प्रमुख शाषकले राजनेतामा हुनुपर्ने गुण सर्वप्रथम आफूमा विकसित गर्नू । अनि आफू समानका गुण भएका व्यक्तिहरुलाई साथमा लिएर राज्य चलाउनू ।

व्याख्या: सरकार, तालिम दिने वा लिने तालिम केन्द्र वा अपराधीलाई सुधार्ने सुधारगृह होइन । न त राज्यको ढुकुटी कसैले पुहुन्की लिने वा कसैले पुहुन्की दिने ठाउँ नै हो । नेपालका सम्बन्धमा तटस्थ भएर भन्नुपर्दा हाम्रा सबै खाले राजनीतिका संवाहकलाई कतै आफू चढेको गाडी दासढुङ्गाबाट खस्दछ कि, कुनै दिन घरमा पारिवारिक जमघट गरी खाना खाँदै गर्दा गोली पो चल्छ कि वा पिसाब फेर्न जाँदा शौचालयमै इहलिला समाप्त हुन्छ कि भन्ने सन्त्रास देखिन्छ । आफू भित्रको यो सन्त्रासलाई उ जनताका बीचमा बाँड्न पनि सक्दैन । हामी बिचरा जनता यस्तो रोबोट- राजनीति भित्र काल्पनिक राजनेता खोजिरहेका छौं ।

## नासहायस्य मन्त्रनिश्चयः ॥१६॥

मन्त्रिपरिषदको बौद्धिक सहयोग नभई राजा (वा प्रधानमन्त्री) एक्लैले आफ्नो सीमित अनुभवको बलमा राजकाज सम्बन्धी दूरगामी असर गर्ने एवं जटिल कामकर्तव्यहरूका विषयमा उचित निर्णय गर्न सक्दैन ।

व्याख्या: अदूरदर्शी निर्णयका कारण आफ्नो र अन्ततोगत्वा देशको अहित हुने हुनाले राजा (वा कार्यकारी प्रमुख) ले निष्कलङ्क, क्षमतावान् एवं विद्वानहरुलाई मन्त्री बनाउनु पर्दछ ।

## नैकं चक्रं परिभ्रमयति ॥१७॥

जसरी एक पाङ्ग्राले रथ गुड्न सक्दैन त्यसरी नै राजा (वा कार्यकारी प्रमुख) एक्लैले मन्त्रीमण्डलको सहयोग नलिई राज्यरुपी रथ गुडाउन सक्दैन ।

## सहायः समदुःखसुखः ॥१८॥

सुख एवं दुःखमा समेत राजा (वा कार्यकारी प्रमुख) लाई  समान भावले सहयोग गर्ने मन्त्री आदिलाई सहायक भनिन्छ ।

व्याख्या: सहायक तीन  किसिमका हुन्छन्- आफू समान शक्ति भएका, आफूभन्दा बलिया र आफूभन्दा निर्बल । सुखदुःखमा समभाव राख्ने यी तीनै किसिमका सहायक अपनाउन योग्य हुन्छन् । भुलेर पनि राजा (वा कार्यकारी प्रमुख) ले “म सबभन्दा शक्तिशाली छु” वा “म सबभन्दा कमजोर छु” वा “सबै मजस्तै बराबर छन्” भन्ने कुरा नसोच्नू । प्राकृतिक न्यायको सिद्धान्त अनुसार व्यक्तिहरूका बीचमा दया, माया, मित्रता आदि भावमा समानता हुन सक्दछ, अरु कुनै कुरामा समानता हुँदैन ।



## मानी प्रतिमानिनमात्मनि द्वितीयं मन्त्रमुत्पादयेत् ॥१९॥

उन्नती चाहने राजा (वा कार्यकारी प्रमुख) ले जटिल समस्या उत्पन्न हुँदा पक्ष र विपक्ष दुवै आफैं भई विचारहरु लेराउनू । आफूभित्र पहिले विपक्षी मतलाई स्थान दिनू र त्यसपछि पक्षलाई स्थान दिई समस्याको समाधान निकाल्नू ।

## अविनीतं स्नेहमात्रेण न मन्त्रे कुर्वीत ॥२०॥

राजा (वा कार्यकारी प्रमुख) ले कुनै पनि महत्वपूर्ण निर्णय गर्दा कर्तव्य-अकर्तव्य छुट्याउन नसक्ने खालको कुनै पनि विवेकहीन व्यक्तिलाई आपसी स्नेह वा अन्य व्यक्तिगत स्वार्थका आधारमा (छलफलमा) सहभागी नगराउनू ।

## श्रुतवन्तमुपधाशुद्धं मन्त्रिणं कुर्यात्॥२१॥

तर्कशास्त्र, दण्डनीति, वार्ता आदि विभिन्न विधाका विद्यामा पोख्त एवं गोप्य तरिकाले लिइएको लोभ-परीक्षामा उत्तीर्ण (शुद्ध) हुने व्यक्तिलाई राजा (वा कार्यकारी प्रमुख) ले मन्त्रीमा नियुक्त गर्नू ।

## मन्त्रमूलाः सर्वारम्भाः॥२२॥

भविष्यमा गरिने सबै कार्य पूर्व तयारीले नै सम्पन्न हुन्छन् ।

व्याख्याः तात्पर्य यो हो कि कुनै कार्य शुरु गर्नु अघि स्वतन्त्र विशेषज्ञसँग बसी त्यसका फाइदा बेफाइदा, कार्य सम्पन्न गर्ने विधि, प्रयोग गरिने साधन र श्रोत, त्यसमा संलग्न हुने जनशक्ति, स्थान चयन आदिका विषयमा गहन छलफल गर्नु पर्दछ ।

## मन्त्ररक्षणे कार्यसिद्धिर्भवति॥२३॥

गरिएका निर्णय गोप्य रहे मात्र आँटिको काम सफल हुन्छ ।

व्याख्याः सूत्र २२ अनुसार स्वतन्त्र विज्ञसँगको गहन परामर्श पछि तयार पारिएको योजनालाई गोप्य राख्नु पर्दछ । सबै कुरा सार्वजनिक गरिए आँटिको कार्य सम्पन्न वा सफल हुँदैन । यस्ता योजना स्वेच्छाले सार्वजनिक गर्ने मन्त्री वा विज्ञलाई राजा (वा प्रधानमन्त्री) ले तुरुन्त दण्ड दिनू ।

## मन्त्रविस्रावी कार्यं नाशयति॥२४॥

निर्णय गोप्य राख्न नसक्ने मन्त्रीले गर्दा राजा (वा प्रधानमन्त्री)ले आँटिको कार्य नष्ट हुन्छ, पूरा हुँदैन ।

व्याख्याः यस सम्बन्धमा असावधान, मदोन्मत्त, उडन्तरी, विषयलम्पट,

अभिमानी, कनसुत्ले र विषयान्तरमा छलफल गर्न रुचाउने मन्त्रीले बैठकका कुरा चुहाउँछन् त्यसैले यस्ता व्यक्तिलाई मन्त्री नबनाउनू ।

## प्रमादाद् द्विषतां वशमुपयास्यति ॥२५॥

राजसभा (वा मन्त्रीमण्डल) को कुनै सदस्यले अनधिकृत व्यक्तिलाई बैठकको कुरा चुहाउने गर्दछ भने असल नै भएपनि बैठकबाट गरिएको त्यो निर्णयका कारण राजा (वा प्रधानमन्त्री) ले विपक्षी वा शत्रुको वशमा जानु पर्दछ अर्थात् झुक्नु पर्दछ ।

## सर्वद्वारेभ्यो मन्त्रो रक्षितव्यः ॥२६॥

गोप्य निर्णय कुनै पनि ढोकाबाट बाहिर जान नदिई राजा (वा प्रधानमन्त्री) ले रोक्न सक्नु पर्दछ ।

## मन्त्रसम्पदा हि राज्यं वर्धते ॥२७॥



आवश्यक विचार विमर्श र पर्याप्त गृहकार्य सहित गरिएको निर्णयको सफल कार्यान्वयनले गर्दा नै राज्य (राज्यश्री, यश र जनसन्तोष) को वृद्धि हुन्छ ।

व्याख्या: यसैले कुनै महत्वपूर्ण बैठकमा कसैलाई आमन्त्रण गर्दा वा नियमित सदस्य राखेर छलफल गर्दा समेत तिनको योग्यताको पूर्ण परीक्षण गर्नु पर्दछ । अनुहार हेरेर बैठकमा सामेल गर्ने होइन, योग्यताको गोप्य परीक्षण गरेर सामेल गर्नु किन कि ती अरु कसैका गुप्तचर पनि हुन सक्दछन् -कौटिल्य अर्थशास्त्र ।

## श्रेष्ठतमां मन्त्रगुप्तिमाहुः ॥२८॥

राजनीतिमा छलफलका निर्णयलाई समय अगावै बाहिर ननिकाल्ने नीतिलाई सबभन्दा श्रेष्ठ नीति मानिन्छ ।

व्याख्या: उत्कृष्ट सल्लाह पाउन राज्यप्रमुखले सदा लालायित रहनु-राजा भोज । मूर्ख, दुराचारी, रुखो, आफ्नो आफैंले प्रशंसा गर्ने, चाँडै रिसाउने र नावालकलाई कहिल्यै बैठकमा सामेल नगर्नू-देवगुरु बृहस्पति । समग्र देशको हीतलाई ध्यानमा राखी कुनै व्यक्ति वा समूहका विरुद्ध गरिने कुनै पनि निर्णय कार्यान्वयन नभई बाहिर ननिकाल्नाले आँटिको काम कहिल्यै अधूरो वा अपूरो हुँदैन-महात्मा विदूर ।

## कार्यान्धस्य प्रदीपो मन्त्रः ॥२९॥

जब कुनै दिन के गर्ने ? के नगर्ने ? भन्ने द्विविधा उत्पन्न हुन्छ, अगि हिँड्ने बाटोका विषयमा दिग्भ्रम पैदा हुन्छ, तब <u>तटस्थ विद्वानहरूसँग</u> विचारविमर्श गरी तयार गरिएको नीतिले राजा (वा प्रधानमन्त्री) लाई मार्गदर्शन गर्दछ ।

व्याख्या: स्वतन्त्र एवं सही ज्ञानले सिद्धान्त र नयाँ कुराहरु जन्मिन मद्दत गर्दछ अर्थात् राष्ट्रका लागि वा मानव मात्रका लागि हितकर हुने अनेकौं आविष्कारहरु हुने वातावरण बन्दछ । सिद्धान्तमा सङ्कुचित ज्ञानबाट यस्ता आविष्कारहरू हुन असम्भव हुन्छ । त्यसैले राज्यले कहिल्यै सही र स्वतन्त्र ज्ञानलाई सङ्कुचित बनाउनतिर नलाग्नु-बृहस्पति सूत्र । आधारभूत कुराहरु हरेक भूगोल, संस्कृति र भाषाबाट सिक्न हुन्छ, तर त्यसको प्रयोग र विकास आफ्नो धरातललाई हेरेर गरिनु पर्दछ-कौटिल्यको अर्थशास्त्र ।



## मन्त्रचक्षुषा परछिद्राण्यवलोकयति ॥३०॥

योग्य मन्त्रीहरूसँग बसेर गरिएको गहन छलफलबाट विपक्षीका कमजोरीहरू राजा (वा प्रधानमन्त्री) ले देख्न सक्दछ ।

## मन्त्रकाले न मत्सरः कर्तव्यः ॥३१॥

कसैलाई सल्लाहका लागि सभा वा बैठकमा बोलाएपछि बिना भेदभाव र बिना इर्ष्या उसका कुरा धैर्यतापूर्वक सुन्नु पर्दछ । त्यसबेला उसलाई अभिमानपूर्वक होच्याउन, हेप्न,

घृणा गर्न र चापलुसी गर्न हुन्न ।

व्याख्या : आफूलाई सर्वेसर्वा ठान्ने व्यक्ति वा समूहले कसैबाट कहिल्यै खँदिलो सल्लाह पाउँदैन । यस्ता व्यक्तिलाई सल्लाह दिन आउनेहरु कि भाट बन्दछन् कि गोप्य षडयन्त्रकारी । किन कि जहिले पनि अहंले कुण्ठालाई जन्म दिन्छ । नेपालको संसदीय अभ्यास यस मामिलामा पञ्चायतकाल देखि नै त्रुटीपूर्ण छ । संसदमा बयान दिन जानु वा केही कुरा स्पष्ट पार्न जानुलाई अदालतको कठघरामा बयान दिन जाने जसरी हेर्ने गरिन्छ । मैले देखे जानेसम्म विशेष आशिर्वादप्राप्त बाहेक कुनै पनि कर्मचारी संसदको यो शैलीप्रति खुशी छैनन् । अहिले त जनयुद्धकालीन तथाकथित जन-अदालत जस्तो शैली संसद भित्र देखिन थालेको छ । यसले कालान्तरमा विकृति अझ संस्थागत हुनेछ तर पनि आत्मरति भने दिनानुदिन बढिरहेछ ।

**त्रयाणामेकवाक्ये सम्प्रत्ययः ॥३२॥**



कुनै नीति, योजना वा निर्णयको सफल कार्यान्वयनका लागि सल्लाह लिने, सल्लाह दिने र भरपर्दा हितैषीका बीचमा मतैक्यता हुनु पर्दछ ।

व्याख्याः यी तीन वटै पक्ष स्वतन्त्र, निःस्वार्थ र निष्पक्ष नहुँदासम्म मतैक्यता सम्भव नै हुन्न । हाम्रोमा "मैले फरक मत राखेको थिएँ, छु वा राख्नेछु" भन्ने कारण नै यही हो ।

**कार्याकार्य-तत्वार्थदर्शिनो मन्त्रिणः ॥३३॥**

कुनै पनि कुराको फाइदा, बेफाइदाका सम्बन्धमा ठीक तरिकाले बुझ्ने, तोकिएको तलबभत्ता भन्दा बढी लोभ नगर्ने (वा तोकिएको कार्यक्षेत्रको अतिक्रमण नगर्ने) र विषयवस्तुको गाम्भीर्यतालाई गम्भिरतापूर्वक मनन गर्ने मन्त्रीहरू हुनुपर्दछ ।

**षट्कर्णाद् भिद्यते मन्त्रः ॥३४॥**

राजा (वा प्रधानमन्त्री) ले गर्ने कुनै पनि महत्वपूर्ण निर्णयलाई अन्तिम रुप दिन दुई जना भन्दा बढी सहभागी नहुनू , छ (६) कानमा पुगेको गोप्य निर्णय छिन्नभिन्न हुन्छ ।

## आपत्सु स्नेहसंयुक्तं मित्रम् ॥३५॥

आपदविपदमा जब आफ्नै शरीरका जुम्राले पनि साथ दिन छोडिरहेका हुन्छन्, त्यतिखेर जसले साथ दिन्छ वा स्नेहयुक्त सहानुभूतिका दुई शब्द मात्र भएपनि आएर आफूमाथि खर्च गर्दछ त्यसैलाई नै मित्र भनिन्छ ।

## मित्रसंग्रहणे बलं सम्पद्यते ॥३६॥

असल मित्रहरू बढाइए वा भेटिए मानिसलाई आडभरोसा वा बल प्राप्त हुन्छ ।

## बलवानलब्धलाभे प्रयतते ॥३७॥

सत्यवादी एवं सन्मित्रको बलमा बलवान व्यक्तिले राज्य ऐश्वर्य पाउन र बढाउन निरन्तर सत्प्रयास गर्नु (गर्दछन्) ।

## अलब्धलाभो नालसस्य ॥३८॥

अप्राप्त राज्य-ऐश्वर्य प्राप्तीको चाहना गरी अनवरत प्रयाश गर्नु भनेको अल्छीको काम हुँदै होइन ।

व्याख्या: सत्यनिष्ठा नहुनु नै अल्छी हुनु हो । सत्यहीन व्यक्ति गर्न नहुने काम खूब जाँगर लगाएर गर्दछ र गर्न योग्य कामलाई बहाना बनाएर पन्छाउँदछ । अकर्तव्यमा लिप्सा हुनु र कर्तव्यबाट पलायन हुनु भनेकै अल्छीपन हो ।

## अलसस्य लब्धमपि रक्षितुं न शक्यते ॥३९॥

कर्तव्याकर्तव्यलाई नमानी उन्मत्त हुने अल्छीले जेजति राज्यकोष उपलब्ध छ त्यो पनि जोगाउन सक्दैन ।

व्याख्याः भित्र तातोछारो केही नहुने तर बाहिर धाक देखाएर हिँड्ने व्यक्तिलाई सुकुलगुण्डो भनिन्छ । यस्तो सिद्धान्तलाई सुकुलगुण्डे-सिद्धान्त र यस्तो व्यवस्थालाई सुकुलगुण्डे-व्यवस्था भनिन्छ । मानिसले उपभोग गर्ने कुरामा परनिर्भरता जहिलेदेखि शुरु भयो त्यही बेलादेखि नै कर लिनेदिने प्रचलन शुरु भयो । समय अनुसार जमिन, पानी, ढुङ्गा, रत्न, धातु, उत्पादित वस्तु, मुद्रा र नोट करकारुपमा लिनेदिने चलन चलाइए । राज्यकोष भनेकै देशभित्र उपलब्ध हुने प्राकृतिक श्रोत-साधन तथा राज्यले दिने सेवाको देशभित्र वा देशबाहिर गरिने बिक्रीबाट प्राप्त हुने मूल्यको समष्टीगत रूप हो । यसमा दण्ड, जरिवाना, जफत आदि पनि समावेश भएका हुन्छन् । जबसम्म करलाई लिनेले नासो र दिनेले आफ्नै सम्पत्तिकारुपमा लिन्छन् तबसम्म त्यो देशमा कुनै समस्या आउँदैन । जब राज्यकोष सुकुलगुण्डे प्रवृत्तिमा खर्चहुन थाल्दछ तब देश नष्ट हुन्छ । कुनै पनि पदमा रहने कुनै पनि व्यक्तिले कुनै पनि बहानामा व्यक्तिगत वा समूह विशेषका स्वार्थी प्रयोजनका लागि राज्यकोष खर्च गर्नु हुन्न । आयका श्रोत वृद्धि गर्न असक्षम राज्य (वा राजा) ले सुकुलगुण्डे विकास देखाउन अरु उपाय पाउँदैन र जनतामाथि करको बोझ बढाउँदछ ।  जनतामा पनि नक्कली आयश्रोतप्रतिको मोह बढ्दै जान्छ । सुकुलगुण्डे जीवनस्तर जिउन राजादेखि रंकसम्म राज्यकोषलाई लुटिरहेका हुन्छन्, सत्कर्मको सर्वत्र लोप भइरहेको हुन्छ । यस्तो अवस्था आउनु भनेको राज्य असफलतातिर गइरहेको पूर्वलक्षण हो ।

## न चालसस्य रक्षितं विवर्धते ॥४०॥

कथनी र करणीमा एकरुपता नभएको र "नपाउनेले केरा पायो बोक्रै शुद्ध चपायो" को शैलीमा प्राप्त पद र सुविधाको उपभोग गर्दछ । उन्माद एवं अल्छी गर्ने व्यक्तिले भाग्यवश कुनै दिन अरुले जोगाइदिएको राज्यकोष उपभोग गर्न पाए पनि त्यो सक्दछ मात्र, त्यो कोषको वृद्धि गरेर लैजान सक्दैन । अकर्मण्य वा अल्छी व्यक्ति भँडारे भए भण्डार रित्तिन्छ मात्र, जोगिन्न, बढ्दैन ।

## न भृत्यान् प्रेषयति ॥४१॥

सत्यहीन, प्रयत्नहीन, अज्ञानी र उपभोगमा आशक्त राजा वा राजकर्मचारीले आफू मातहतका कर्मचारीबाट काम लिन सक्दैन ।

व्याख्या: यस्ता राजा (वा प्रधानमन्त्री वा मन्त्री वा अधिकारी) मा उचित कार्यका लागि उचित कर्मचारी छनोट गर्ने योग्यता समेत हुँदैन । यस्ता नालायक व्यक्ति प्रमुख पदमा आसिन हुनु भनेको पनि राज्यविरुद्ध अपराध हुनु हो । राजद्रोही हुन सशस्त्र वा निःशस्त्र विद्रोह नै गर्नुपर्दछ भन्ने हुँदैन, सत्तासीन व्यक्तिमा हुने अकर्मण्यता वा अल्छीपन पनि राजद्रोह नै हो ।

## न तीर्थं प्रतिपादयति ॥

जो शाषक अल्छी छ उ राज्यका योग्य, इमान्दार र कर्तव्यनिष्ठ विद्वानहरूको ज्ञानबाट लाभ लिनबाट बञ्चित हुन्छ ।

## अलब्धलाभादिचतुष्टयं राज्यतन्त्रम् ॥४२॥



(क) नपाइएका उपलब्धी हासिल गर्नु (ख) पाइएका उपलब्धीको रक्षा गर्नु (ग) संरक्षित उपलब्धीलाई वृद्धि गर्दै लैजानु र (घ) संरक्षित उपलब्धी (नगद वा जिन्सी वा विकास) लाई उचित व्यक्तिलाई उचित कार्यमा लगाई (The Right Man in the Right Place at the Right Time) बाँडफाँड गर्न लगाउनु-यी चार कुरा सफल राज्यव्यवस्थाका मूल आधार हुन् । यी चारको समष्टीलाई नै राज्यतन्त्र भनिन्छ । भविष्यमा कुन राज्य वा कुन व्यवस्था कस्तो हुन्छ भन्ने कुरा यिनै चार कुराले निर्धारण गर्दछ ।

## राज्यतन्त्रायत्तं नीतिशास्त्रम् ॥४३॥

नागरिकहरूका बीचमा सदाचार र नीतिसम्मत वा कानुनसम्मत व्यवहार तबमात्र सम्भव हुन्छ जब देश चलाउन बस्नेहरुको विगत, वर्तमान र भविष्य सदाचारले युक्त, नीतिसम्मत र कानुनसम्मत हुन्छ ।

व्याख्या: समूहमा रहनुलाई मात्र समाज भनिन्न किन कि पशुहरू पनि समूहमा रहन्छन् । धर्म, अर्थ र काम-यी तीन कुरालाई व्यक्तिगत स्वार्थबाट जोगाउन नै नीतिहरुको जन्म भएको हो । सत्तामा वा कुनै पनि क्षेत्रको प्रमुख पदमा रहने व्यक्ति समाजका लागि अनुकरणीय हुने गर्दछ । यदि उ सदाचारी छैन, नीति अनुसार वा कानुन अनुसार चल्दैन भने उसैको सिको गर्ने समाजबाट सामाजिक सदाचारको आश गर्नु बेकार हुन्छ ।

## राज्यतन्त्रेप्वायत्तौ तन्त्रावापौ ॥४४॥

स्वराष्ट्र तथा परराष्ट्र सम्बन्धी कर्तव्य : यी दुवै राज्य व्यवस्थाका अभिन्न अङ्ग हुन् ।

व्याख्या: यी दुवै कर्तव्यलाई समानान्तररूपमा व्यवस्थित गर्नु पर्दछ । एउटामा अलिकति चुक्दा अर्कोमा त्यसले असर गर्दछ । छिमेकीसँग राम्रो सम्बन्ध नहुने घर लथालिङ्ग भइरहेको हुन्छ भने लथालिङ्ग हुने घरले असल छिमेकी पनि पाउन सक्दैन । अर्काको दयामा बाँच्न सिकिरहेको घरले स्वाभिमानका कुरा गर्न सुहाउँदैन ।



## तन्त्रं स्वविषयकृत्येष्वायत्तम् ॥४५॥

राज्य सञ्चालकहरू कर्तव्यनिष्ठ भए राज्य पनि आफैं सुव्यवस्थित हुन्छ ।

व्याख्या: सत्तासीन व्यक्तिका विगत र वर्तमान गलत (खोटपूर्ण) भएमा जतिसुकै पहल गरिए पनि त्यो राज्यमा अव्यवस्था भइरहन्छ किन कि आम नागरिकमा "गलत गर्दा पो उन्नती हुँदो रहेछ त !" भन्ने भावनाको विकास हुने गर्दछ । यसैकारण कुनै क्रान्ति वा परिवर्तन पश्चात् त्यसका संवाहकहरुले अर्को पुस्तालाई सत्ता जिम्मा लगाउने चलन चलेको हो ।

## आवापो मण्डलनिविष्टः ॥४६॥

छिमेकी देशसँगको सम्बन्धको आधार उसले आफ्नो देशको हीत अनुकूल वा प्रतिकूल के हुनेगरी मोर्चाबन्दी गर्दछ सोही अनुसार निर्देशित हुनु पर्दछ । यही कुरालाई

मध्यनजर गरी सूक्ष्म विश्लेषण गर्न सक्ने गरी वैदेशिक मामिला हेर्ने समूहलाई हरहमेशा सक्रिय बनाउनु पर्दछ ।

## सन्धिविग्रहयोनिर्मण्डलः ॥४७॥

वैदेशिक मामिला हेर्ने विशेष किसिमको समूहले छिमेकीदेशसँग गरिने व्यवहारको निर्णय गर्नु । सन्धी वा विग्रहका बारेमा देशप्रमुखलाई सल्लाह दिनु । सन्धी र विग्रहका अनेक तरिका हुन्छन् । व्याख्याः जुन देशमा पद्धति हुन्न त्यो देशका सल्लाहकार नै विदेशीका जासुस हुने गर्दछन् ।

## नीतिशास्त्रानुगो राजा ॥४८॥

व्यवहार शास्त्र, अर्थशास्त्र र दण्डनीति : यी तीनको समष्टिगत नाम नै नीतिशास्त्र हो । देशको बागडोर सम्हाल्ने व्यक्तिमा नीतिशास्त्रको ज्ञान हुनै पर्दछ ।

## अनन्तरप्रकृतिः शत्रुः ॥४९॥

आफ्नो देशको प्रगतीमा बाधा हाल्ने छिमेकी देश शत्रु देश हुन् ।

व्याख्याः छिमेकीको प्रगतीमा इर्ष्याभाव राख्ने, त्यसमा अवरोध लेराउन आफू अनुकूलको सत्ता बनाउने अनि छिमेकीका जनतालाई विभिन्न समूह र उप-समूहमा विभाजन गरी गलत बाटोमा लैजाने छिमेकी देश शत्रु देश हुन्छ । नेपाल यस मामिलामा पनि निरीह छ । परिवर्तन यहाँका जनता आफूले गरेको ठान्दछन् । तर सात साल देखिका हरेक परिवर्तनको सूत्रधार विदशी देखिएका छन् र परिवर्तनको व्यवस्थापन पनि विदेशीले नै गरिरहेको देखिन्छ । आफूले परिवर्तनका लागि गरेको त्याग र आफूले समर्थन गरेका नेताको वास्तविकतामा हामी शङ्का नगर्न अभ्यस्त बनाइएका छौं, दुभार्ग्य नै यही हो ।

## एकान्तरितं मित्रमिष्यते ॥५०॥

नजिकै रहेको दुश्मन देशभन्दा उता (पर) रहेको अर्को देश जसको हाम्रो देशको शत्रुदेशसँग शत्रुता छ, त्यो हाम्रो मित्र देश हुन्छ ।

## हेतुतः शत्रुमित्रे भविष्यतः ॥५१॥

बिना प्रयोजन कोही कसैको शत्रु वा मित्र हुँदैन ।

व्याख्याः सदाचार वा उपकारले मित्र र दुराचार वा अपकारले शत्रु बढ्ने गर्दछन् । नित्यमित्र, सहजमित्र र कृत्रिममित्र गरी मित्र तीन थरीका हुन्छन् । कुनै कारण विशेष बिना अनायाश हुने मित्रलाई नित्यमित्र, कुलपरम्परा अनुसार बनेको मित्रलाई सहजमित्र र प्रयोजन लिई हुने मित्रलाई कृत्रिम मित्र भनिन्छ ।

## हीयमानः सन्धिं कुर्वीत ॥५२॥

नीतिज्ञ तर निर्बल राजा वा राष्ट्रप्रमुखले अन्यायी तर आफूभन्दा सशक्त र बलियो राज्यसँग सन्धी गर्नू र हुनसक्ने युद्धबाट आफ्नो देशको रक्षा गर्नू ।



## हीयमानेन न सन्धिं कुर्वीत ॥

नीतिहीन तर कमजोर शत्रुसँग सन्धि नगर्नू, उसलाई जित्नू ।

## तेजो हि सन्धानहेतुस्तदर्थानाम् ॥५३॥ (तेजो हि सन्धानहेतुस्तदर्थिनाम्) ।

सन्धि चाहने दुवै देशको तेज, प्रभाव र प्रताप नै वास्तविक र साँचो मानेमा सन्धिको कारण हुने गर्दछ ।

## नातप्तलोहो लोहेन सन्धीयते ॥५४॥ (नातप्तलोहं लोहेन सन्धत्ते) ।

तताइएको फलामसँग फलामकै सन्धि (मेल) हुँदैन ।

व्याख्या: तातेको फलामलाई फलामले नै पिटिरहेको हुन्छ । चाणक्यको यो सूत्रलाई दुई किसिमले व्याख्या गर्न सकिन्छ । पहिलो-शत्रुमाथि प्रहार गर्दा उ निस्तेज भएको बेलामा गर्नुपर्दछ । दोश्रो-सन्धि चाहने हो भने निम्छरो राज्यसँग पनि केही तेज अवश्य बचेको हुनुपर्दछ । सन्धिको प्रस्ताव अपवादमा बाहेक निम्छरो वा हार्नेबाट नै आउने गर्दछ । केही नभए पनि "योसँग केही चाहीँ पक्कै छ है !" भन्ने भान पारिरहनु पर्दछ, नत्र देशको अस्तित्व समाप्त हुन्छ । यस सम्बन्धमा महाकवि भारविको यो भनाईलाई यहाँ समेट्नु उपयुक्त देखिन्छ-"आवेश (तेज) हीन भएर पलायनमुखी भएको मानिस सभ्यसमाजका लागि मरेसरह हुन्छ । यस अवस्थामा न मित्र न त शत्रु नै उसको सम्मान गर्दछन्" । जुनदेश वा त्यसका शाषकसँग तेज छैन त्यस्ता देशले बाँदरको जस्तो घुर्की देखाउने गर्दछ । यस्ता देशले शक्तिशालीसँग गर्ने सन्धिमा यतिधेरै असमानताहरू हुन्छन् कि घुर्की देखाउने देश भित्तामा अँचेटिएको हुन्छ, तर पनि फूर्ति र घुर्की देखाउन भने उ छाड्दैन । शक्तिशाली देशले फ्याँकिदिने केही टुक्रा रोटीका लागि उ बेलाबेलामा घुर्की देखाई रहने गर्दछ ।



**बलवान् हीनेन विगृह्णीयात् ॥५५॥ (बलवान् हीने न विगृह्णीयात्) ।**

बलियोले निर्बल वा निम्छरो शत्रुलाई युद्ध वा विवादले होइन अन्य बौद्धिक उपायले वशमा पार्नु पर्दछ ।

**न ज्यायसा समेन या ॥५६॥**

कुनै पनि राज्यले आफूभन्दा बलियो वा आफूसमान छिमेकीसँग निहुँ नखोज्नू ।

व्याख्या: उभन्दा बलियो हुन बुद्धिको प्रयोग गर्नू, अन्यथा नोक्सान आफ्नो नै हुने गर्दछ ।

**गजपादविग्रहमिव बलवद्विग्रहः ॥५७॥ (हस्तिनः पादयुद्धमिव बलवद्विग्रहः) ।**

आफूभन्दा बलियो छिमेकीसँग प्रत्यक्ष युद्ध गर्नुभनेको पैदल सेना लिएर हात्ती चढेका सेनासँग जुध्नु जस्तै हो ।

व्याख्या: खुकुरी नचाएर आणविक शक्तिसम्पन्न देशलाई झुकाएँ वा झुकायौं भनी सोच्नु भनेको आत्मरति हो, भ्रमको खेती हो, जुन् खेती यहाँ मजाले फष्टाउने गरेको छ । कुहिनुले पहरामा हान्दा पीडा पहरालाई हुँदैन, आफैंलाई हुँदो रहेछ, यही नियति हामीले पचासौं वर्षदेखि भोगिरहेका छौं । यो तीतो सत्यबाट बाहिर निकाल्न सक्षम राजनीतिको यो देशमा जन्म नै भएको छैन । हिङ उहिल्यै सकिएको छ, हिङ बाँधेको टालो निचोरेर झान्दै यहाँ जनतालाई दाल खुवाइरहेका छन् ।

## आमपात्रमामेन सह विनश्यति ॥५८॥ (आमपात्रमापेन विनश्यति) ।

जसरी माटो, सिसा आदिका भाँडाकुँडा एक आपसमा ठोकिँदा दुवै फुट्दछन्, त्यसैगरी समान शक्ति भएका देश वा व्यक्तिहरू एक आपसमा जुधे भने दुवै नष्ट हुन्छन् वा दुवैलाई हानी हुन्छ । कुनै उपाय नै बाँकी नबचे मात्र यस्ताले युद्ध वा झगडा गर्नू ।



## अरिप्रयत्नमभिसमीक्षेत ॥५९॥ (अरिप्रयत्नमभिसमीक्ष्यात्मरक्षयावसेत्) ।

शत्रुका सबै खाले प्रयत्नहरू गुप्तचरहरू मार्फत सहीरूपमा थाहा पाई बेलैमा सावधान हुनू ।

## सन्धायैकतो वा ॥६०॥

सम्बन्ध राम्रो हुँदा वा नहुँदा पनि शत्रु (वा छिमेकी देश) बाट आफूसँग सम्बन्धित (वा राज्य चलाउन आवश्यक पर्ने) सबै सूचना गुप्तचर मार्फत लिइ राख्नू । निष्फिक्री भएर कहिल्यै नबस्नू ।

## अरिविरोधादात्मरक्षामावसेत् ॥६१॥

देश बाहिर वा देश भित्रका शत्रुबाट आफ्नो देशभित्र हुने लुटपाट, आगजनी, कुनीति,

गुटबन्दी आदिबाट देशलाई बचाइ राख्नू ।

## शक्तिहीनो बलवन्तमाश्रयेत्॥६२॥

शक्तिहीन राज्यले त्रिवर्ग (धर्म, अर्थ र काम) मा नै बलियो रहेको कुनै राज्यलाई मित्र बनाई आफ्नो स्वतन्त्रता र सीमा सुरक्षित गर्नू ।

व्याख्या: अर्थप्रधान समाज प्रकृति प्रदत्त जिम्मेवारीबाट विमुख हुन्छ, कालान्तरमा बिहे, सन्तानोत्पादन आदि जस्ता कुरालाई पनि पैसासँग तौलन थाल्दछ । धर्मप्रधान समाज यथास्थितिमा रहन्छ । कामप्रधान समाज जडवत् हुन्छ, कुनै पनि कुराले उसलाई असर गर्न छाड्दछ । यसैले धर्म, अर्थ र काम गरी त्रिवर्गको उचित सम्मिश्रण भएको राज्यलाई नै आदर्श राज्य भनिन्छ ।

## दुर्बलाश्रयो दुःखमावहति॥६३॥ (दुर्बलाश्रयो हि दुःखमावहति) ।



कमजोर छिमेकीको आश्रय लिए त्यो देश दुःखमा पर्दछ ।

## अग्निवद्राजानमाश्रयेत्॥६४॥

आफूभन्दा शक्तिशाली देशसँग सम्बन्ध राख्दा पनि एउटा व्यक्तिले आगोसँग कसरी र कति सम्बन्ध राख्दछ वा राख्न सक्दछ, त्यसरी र त्यति नै सम्बन्ध राख्नू ।

## राज्ञ प्रतिकूलं नाचरेत्॥६५॥

(नियमसङ्गत ढङ्गले चलिरहेको राज्यमा) राजद्रोह नगर्नू । नियम नमान्ने राजाको विरोध गर्न शास्त्रले नै छूट दिएको छ ।

## उद्धतवेषधरो न भवेत्॥६६॥

देख्नेको मनले धिक्कार्ने खालको भेषभूषा नगर्नू ।

## न देवचरितं चरेत् ॥६७॥

राजा वा कार्यकारी प्रमुखको चरित्र वा पहिरनको अनुकरण नगर्नू । यसले व्यक्तिको होइन पदको मर्यादा र महत्व खिइन्छ । यसैले शास्त्रमा सामान्यतः सार्वजनिक पद धारण गर्नेको नक्कल गर्न सर्वसाधारणलाई र सर्वसाधारणको नक्कल गर्न सार्वजनिक पद धारण गर्नेलाई निषेध गरिएको छ ।

## द्वयोरपीर्ष्यतोः द्वैधीभावं कुर्वीत ॥६८॥

आफ्नाको इर्ष्या र पराईको बखान गर्ने सोचलाई निर्मूल बनाउनू । यसले देशभक्ति खिइन्छ ।

## न व्यसनपरस्य कार्यावाप्तिः ॥६९॥

कुनै पनि कुलतमा फसेको व्यक्तिले राम्रो र चीरस्थायी परिणाम दिने खालको कुनै पनि कार्य गर्न सक्दैन ।

## इन्द्रियवशवर्ती चतुरङ्गवानपि विनश्यति ॥७०॥

आफूलाई आफ्ना इन्द्रियको अधिनमा स्वतन्त्र छाड्ने राजा (वा राष्ट्र प्रमुख) जतिसुकै शक्तिशाली भएपनि नासिन्छ ।

## नास्ति कार्यं द्यूतप्रवृत्तस्य ॥७१॥

जुवाको लत लागेको व्यक्ति कर्तव्यच्यूत हुन्छ ।

## मृगयापरस्य धर्मार्थौ विनश्यतः ॥७२॥

शिकार गर्ने लतले धर्म र धन (कर्तव्यपालन र आजीविकाको माध्यम) दुवै कुरा नष्ट हुन्छन् ।

## अर्थैषणा न व्यसनेषु गण्यते ॥७३॥

धर्मसम्मत र कानुनसम्मत तरिकाले आजीविकाका साधन बटुल्ने कार्य कुलतमा गणना हुन्न ।

## (अर्थेषु पानव्यसनी न गण्यते) ।

मदिरा पिउने आदत भएका व्यक्ति महत्वपूर्ण काममा विश्वास गर्न लायक हुँदैनन् ।

## न कामासक्तस्य कार्यानुष्ठानम् ॥७४॥

स्त्री (आफ्नो वा पराया) लम्पट व्यक्ति कुनै पनि काम ढङ्गसँग गर्न सक्दैन ।

## अग्निदाहादपि विशिष्टं वाक्पारुष्यम् ॥७५॥



कसैलाई मर्मस्पर्शी वचन बोल्नु आगोले पोल्नुभन्दा बढी दुःखदायी हुन्छ ।

## दण्डपारुष्यात् सर्वजनद्वेष्यो भवति ॥७६॥

दण्डदाता (न्यायाधीश) मा व्यक्तिगतरूपमा द्वेष वा रिस वा लोभ पलाए पछि उसले दण्ड कठोर हुन पुग्दछ, अनि उ जनताका नजरमा गिर्दछ ।

## अर्थतोषिणं श्रीः परित्यजति ॥७७॥

राज्यकोष बढाउन नसक्ने र भएकोमा सन्तुष्ट हुने अकर्मण्य राजालाई लक्ष्मीले छाड्दछिन् ।

## अमित्रो दण्डनीत्यामायत्तः ॥७८॥

तिम्रा शत्रुको क्षय, बलवृद्धि र निर्बलता तिम्रो दण्डनीतिमा हुने ढिलाई र त्यसमा हुने सतर्कतामा भर पर्दछ, त्यसैले दण्डनीतिलाई चुस्त एवं दुरुस्त राख ।

## दण्डनीतिमधितिष्ठन् प्रजाः संरक्षति ॥७९॥

दण्डनीतिको मालिक भएर नै राजा वा राष्ट्रप्रमुखले जनताको संरक्षण गर्न सक्दछ ।

## दण्डः सम्पदा योजयति ॥८०॥

दण्डव्यवस्थाले नै राजा वा राष्ट्रप्रमुखलाई सम्पूर्ण सम्पत्तिले युक्त बनाउँदछ ।

## दण्डाभावे मन्त्रिवर्गाभावः ॥८१॥

दण्डहीनतामा असल र योग्य मन्त्रीहरूको (समेत) अभाव हुन्छ ।

व्याख्या: नेपालजस्ता देशमा असल राजनीतिज्ञको जन्म नहुनुको प्रमुख कारण यही हो ।

## न दण्डाकार्याणि कुर्वन्ति ॥८२॥

दण्डहीनतामा नै मानिसहरू गर्न नहुने कार्य (अकार्य) गर्न थाल्दछन् ।

## दण्डनीत्यामायत्त मात्मरक्षणम् ॥८३॥

दण्डनीतिलाई चुस्तदुरुस्त बनाई राखे मात्र आफ्नो (सत्तामा बस्नेको) पनि संरक्षण हुन्छ ।

## आत्मनि रक्षिते सर्वं रक्षितं भवति ॥८४॥

राजाको आफ्नो रक्षा भए मात्र पूरै देश सुरक्षित रहन्छ ।

**आत्मायत्तौ वृद्धिविनाशौ ॥८५॥**

मानिसको समृद्धि र विनास उसको आफ्नै अधिनमा हुन्छ ।

**दण्डो हि विज्ञाने प्रणीयते ॥८६॥**

दण्डको प्रयोग सोची सम्झी मात्र गर्नु पर्दछ ।

**दुर्बलोपि राजा नावमन्तव्यः ॥८७॥**

राजाले दुर्बल भनेर कसैलाई उपेक्षा (अवज्ञा) नगर्नू ।

**नास्त्यग्नेर्दौर्बल्यम् ॥८८॥**

आगो (जस्तै शत्रु पनि) कहिल्यै दुर्बल हुँदैन ।



**दण्डे प्रतीयते वृत्तिः ॥८९॥**

राजा (वा शाषक) को योग्यता, क्षमता र विशेषता उसले लिइरहेको दण्डनीतिबाट थाहा हुन्छ ।

**वृत्तिमूलमर्थलाभः ॥९०॥**

राज्यकोषमा हुने वृद्धि राजाको चरित्रमा निर्भर हुन्छ ।

**अर्थमूलौ धर्मकामौ ॥९१॥**

धर्म र देश समृद्धिको मूल आधार स्थीर वा प्रगतिशील अर्थतन्त्र हो ।

**अर्थमूलं कार्यम् ॥९२॥**

सबै कार्यको आधार धन हो ।

**यदल्पप्रयत्नात् कार्यसिद्धिर्भवति ॥९३॥**

धन भए हरेक कार्य सामान्य प्रयाशले पनि सफल हुने गर्दछ ।

**उपायपूर्वं न दुष्करं स्यात् ॥९४॥**

जुक्ति लगाएर गर्दा कुनै पनि कार्य कठिन हुँदैन ।

**अनुपायपूर्वं कार्यं कृतमपि विनश्यति ॥९५॥**

आफ्नो जुक्ति नलगाई वा भविष्य नसोची गरिएका जस्तासुकै कार्य पनि नासिन्छन् ।

**कार्यार्थिनामुपाय एव सहायः ॥९६॥**

काम गर्ने चाह हुनेलाई "बुद्धी" नै वास्तविक सहयोगी हुन्छ ।

**कार्यं पुरुषकारेण लक्ष्यं सम्पद्यते ॥९७॥**

कर्तव्यनिष्ठ व्यक्तिमा ढङ्गले काम सम्पन्न गर्ने ध्यान बढी हुन्छ, त्यसले दिने फलको विषय उसका लागि गौण हुन्छ ।

**पुरुषकार मनुवर्तते दैवम् ॥९८॥**

भाग्य (अनुकूलता) मेहनतको पछिपछि हिँड्दछ ।

**दैवं विनातिप्रयत्नं करोति यत्तद्विफलम् ॥९९॥**

(तर पनि) भाग्य (अनुकूलता) छैन भने उत्तम तरिकाले गरिएको काम पनि निष्फल हुन्छ ।

**असमाहितस्य वृत्तिर्न विद्यते ॥१००॥**

चञ्चल चित्त हुनेले गर्ने वृत्ति (पेसा) मा स्थिरता वा स्थायित्व हुँदैन ।

**पूर्वं निश्चित्य पश्चात् कार्यमारभेत् ॥१०१॥**

पहिला सबै कुरा विचार गरेर मात्र कुनै पनि काम गर्न शुरु गर्नू ।

**कार्यान्तरे दीर्घसूत्रिता न कर्तव्या ॥१०२॥**

कार्य गर्न शुरु गरेपछि कुनै पनि बहानामा त्यसलाई नलम्ब्याउनू ।

**न चलचित्तस्य कार्यावाप्तिः ॥१०३॥**

अस्थिर मन हुनेबाट कहिल्यै कुनै पनि काम सम्पन्न हुँदैन ।

**हस्तगतावमाननात् कार्यव्यतिक्रमो भवति ॥१०४॥**

उपलब्ध श्रोतसाधनको सदुपयोग नगर्दा शुरु गरिएको काम पनि नष्ट हुन्छ ।

**दोषवर्जितानि कार्याणि दुर्लभानि ॥१०५॥**

हरेक कर्मका राम्रा र नराम्रा पक्ष हुन्छन् । दोष नभएको कर्म विरलै हुन्छ ।

**दुरनुबन्धं कार्यं नारभेत ॥१०६॥**

यसले राम्रो परिणाम दिँदैन भन्ने शङ्का उत्पन्न भए, त्यस्ता कार्यको शुरुवात नै नगर्नू ।

## कालवित् कार्यं साधयेत् ॥१०७॥

अनुकूल परिस्थितिलाई चिन्न सक्ने व्यक्तिले आफ्नो काम सजिलैसँग पट्याउँदछ ।

## कालातिक्रमात् काल एव फलं पिबति ॥१०८॥

अनुकूल परिस्थिति घर्केपछि गरिने कार्यको फल वा सफलता परिस्थितिले नै चाटेर खाइदिन्छ ।

## क्षणं प्रति कालविक्षेपं न कुर्यात् सर्वकृत्येषु ॥१०९॥

सबै कुरा सोचबिचार गरी काम गर्न एक पल पनि ढिला नगर्नू ।

## देशफलविभागौ ज्ञात्वा कार्यमारभेत् ॥११०॥



देश, काल, परिस्थिति र जनमत तथा सफलताको सम्भावना सोचेर मात्र कार्यारम्भ गर्नु ।

व्याख्या: मूर्खहरु आफूले मनमा सोचेको वा कसैले अह्राएको वा लादेको कामलाई जबरजस्ती शुरु गर्न चाहन्छन् ।

## देशे काले च कृतं फलवत् ॥

देश, काल र परिस्थितिलाई विचार गरी शुरु गरिएका काम नै सफल हुन्छन् ।

## दैवहीनं कार्यं सुसाधमपि दुःसाधं भवति ॥१११॥

दैव (परिस्थिति) प्रतिकूल हुँदा सजिलै सम्पन्न हुने कार्य पनि कठिन हुन्छन् ।

## नीतिज्ञो देशकालो परीक्षेत ॥११२॥

व्यवहार कुशल मानिसले परिस्थिति र अवसर दुवै कुरा विचार गरेर मात्र काम गर्नु पर्दछ ।

**परीक्ष्यकारिणि श्रीश्चिरं तिष्ठति ॥११३॥**

यसरी परीक्षा लिएर काम गर्नेसँग लक्ष्मी पनि लामो समय रहन्छिन् ।

**(सर्वाश्च संपद् उपतिष्ठन्ति ।)**

देश, काल बुझी काम गर्नेलाई सबै खालका सम्पत्ति आफैं आउँदछन् ।

**सर्वाश्च संपदः सर्वोपायेन परिग्रहेत् ॥११४॥**

साम, दान आदि सबै उपायले सबैसँग उचित तरिकाले सम्पत्ति (कर, राजस्व आदि) लिने गर्नू ।



**भाग्यवन्तमपरीक्ष्यकारिणं श्रीः परित्यजति ॥११५॥**

श्री अथवा सफलताले समय नचिन्ने खालका भाग्यमानीलाई पनि छाड्दछ ।

**ज्ञानानुमानैश्च परीक्षा कर्तव्या ॥११६॥**

ज्ञानका आधारमा अनुमान गरी कर्तव्यका बारेमा निर्णय गर्नू ।

**यो यस्मिन् कर्मणि कुशलः तं तस्मिन्नेव योजयेत् ॥११७॥**

जो जे काम गर्न कुशल छ, उसलाई त्यही किसिमको काममा लगाउनू ।

**दुःसाध्यमपि सुसाध्यं करोति उपायज्ञः ॥११८॥**

उपाय जान्नेले कठिन काम पनि सहज र सरल बनाउँदछ ।

## अज्ञानिना कृतमपि न बहु मन्तव्यम् ॥११९॥

अज्ञानीका सफल कर्मलाई सफलता नमानी संयोग मान्नू, धेर महत्व नदिनू ।

## यादृच्छिकत्वात् कृमिरपि रूपान्तराणि करोति ॥१२०॥

घुन आदि कीराले कतै बनाएको चित्रको आकार जानेर बनाएको हुँदैन ।

## सिद्धस्यैव कार्यस्य प्रकाशनं कर्तव्यम् ॥१२१॥

कार्य सफल वा सिद्ध भएपछि मात्र जनतामा प्रचारप्रसार गर्नू ।

व्याख्या:- बच्चा जन्मनु कहिले हो कहिले यहाँ पहिला कस्तो कपडाको भोटो सिउने, कसले कपडा किन्ने, कसको पसलबाट कपडा किन्ने जस्ता विवाद शुरु हुन्छ । निकै ठूलै उपलब्धी हासिल गरेजसरी सहमती गरिन्छ र सहमती भयो भनी ढोल पिटिन्छ । अनि भोटो सिउने कपडा किनिन्छ । फेरी कस्तो सिउने, कसलाई सिउन दिने आदि कुरामा विवाद शुरु हुन्छ । फेरी चन्द्रविजय गरे जसरी सहमती भएको प्रचार प्रसार गरिन्छ । अनि भोटो सिएर सबैलाई देखाउँदै राखिन्छ । तर, बच्चा कसले, कहिले र कसरी जन्माउँदछ यहाँ कसैलाई अत्तोपत्तो हुँदैन । कसैले बच्चा नै नजन्मिई किन पहिले भोटो सिएर राखेको ? भनेर कुरा उठाए सबै एक भएर उसलाई दोष दिन्छन् र कुरा उठाउनेलाई नै उल्लू बनाउँदछन् ।

## ज्ञानवतामपि दैवमानुषदोषात् कार्याणि दुष्यन्ति ॥१२२॥

कहिले काहीँ अनेक थरी काम प्रतिकूल परिस्थिति (भाग्य वा दैव) वा मानवीय त्रुटीले गर्दा अधुरै रहने गर्दछन् ।

## दैवं शान्तिकर्मणा प्रतिषेद्धव्यम् ॥१२३॥

दैवी विपत्तिको शान्ति गर्नू (धैर्यतापूर्वक सामना गर्नू) ।

## मानुषीं कार्यविपत्तिं कौशलेन विनिवारयेत् ॥१२४॥

काम बिगार्ने मानवीय त्रुटीलाई सतर्कता र बुद्धिले सामना गर्नू ।

## कार्यविपत्तौ दोषान् वर्णयन्ति बालिशाः ॥१२५॥

मूर्खहरू शुरु गरिएको काममा बाधा आएपछि "यसो गर्न पाएको भए हुने रहेछ" भनेर चुकचुकाउँदछन्, जुन् कुरा अहिले सोचिएको छ त्यो कुरा पहिले नै सोचिनु पर्दथ्यो ।

## कार्यार्थिना दाक्षिण्यं न कर्तव्यम् ॥१२६॥



कर्मचारीले शत्रुका समाजमा दया वा उदारता नदेखाउनू । अर्थात् सबै कुरा उदाङ्ग हुने गरी नखोल्नू ।

## क्षीरार्थी वत्सो मातुरूधः प्रतिहन्ति ॥१२७॥

दूध पिउन चाहने बाच्छाबाच्छीले आमाको कल्चौंडालाई हिर्काउनु पर्दछ ।

## अप्रयत्नात् कार्यविपत्तिर्भवति ॥१२८॥

आवश्यक सबै प्रयाश नगरे काम नष्ट हुन्छ नै ।

## न दैवप्रमाणानां कार्यसिद्धिः ॥१२९॥

भाग्यको भर पर्ने मान्छेले, न शुरु गरेको काममा सफलता पाउँदछ न त अर्को कुनै नयाँ काम नै शुरु गर्न सक्दछ ।

**कार्यबाह्यो न पोषयत्याश्रितान् ॥१३०॥**

कर्तव्यबाट पलायन हुने मानिसले आश्रितजनको पालनपोषण गर्न सक्दैन ।

**यः कार्यं न पश्यति सोऽन्धः ॥१३१॥**

विवेकरुपी आँखाले कर्तव्य नदेख्ने व्यक्तिलाई सद्दे आँखा भएपनि अन्धो भनिन्छ ।

**प्रत्यक्षपरोक्षानुमानैः कार्याणि परीक्षेत ॥१३२॥**

सामुन्ने देखिएका र नदेखिएका कुरा विचार गरी गर्न आँटिएको कामको परीक्षा गर्नू ।

**अपरीक्ष्यकारिणं श्रीः परित्यजति ॥१३३॥**

सोचविचार नगरी काम गर्नेले सफलता पाउँदैन । 

**परीक्ष्य तार्या विपत्तिः ॥१३४॥**

विघ्न, बाधा वा विपत्तिलाई बुद्धिले पन्छाउनु पर्दछ ।

**स्वशक्तिं ज्ञात्वा कार्यमारभेत ॥१३५॥**

आफ्नो औकात राम्ररी बुझेर मात्र कार्यारम्भ गर्नू ।

**स्वजनं तर्पयित्वा यः शेषभोजी सोऽमृतभोजी ॥१३६॥**

आफूमा आश्रित आफन्तलाई खुवाएर जसले खान्छ उसले अमृत खान्छ ।

**सर्वानुष्ठानदायमुखानि बर्धन्ते ॥१३७॥**

ब्यापार, व्यवसाय, कला आदि सबै कुरा बढे मात्र सरकारको आय बढ्दछ ।

## नास्ति भीरोः कार्यचिन्ता ॥१३८॥

कायरलाई कामको चिन्ता हुँदैन ।

व्याख्या:- कायरले काम गर्नुमा भन्दा नगर्नुमा बढी दिमाग खर्च गरी अनेक थरी बहाना बनाउँदछ ।

## स्वामिनः शीलं ज्ञात्वा कार्यार्थी कार्यं साधयति ॥१३९॥

मालिकको स्वभाव अनुसार काम गर्नेहरूले पनि काम फत्ते गर्ने गर्दछन् ।

व्याख्या:- राजा वा राष्ट्रप्रमुख वीर भए अनुयायीहरू पनि वीर हुन्छन्, उ कायर भए ती पनि कायर भइदिन्छेन् । उ गफाडी भए जनता पनि गफाडी हुन थाल्दछन् । उ कानुन नमानेर मनोमानी गर्ने भए जनता पनि त्यस्तै हुन थाल्दछन् । समग्रमा भन्नुपर्दा सार्वजनिक महत्वपूर्ण पदमा बसेका व्यक्तिको आचरण नजानिदो किसिमले सर्वसाधारणले अनुकरण गरिरहेका हुन्छन् । यसैले सार्वजनिक पद धारण गर्ने व्यक्ति मन, वचन र कर्मले मनोमानी गर्न स्वतन्त्र हुनु हुँदैन । व्यक्तिगत स्वतन्त्रता चाहने व्यक्तिले सार्वजनिक पद त्याग्नु पर्दछ । आफूले भोगेको एउटा उदाहरण दिउँ है । आफूसँगै लागेर काम गरे खेताला पनि अल्छी वा कामचोर हुँदैनन् । मेला जाँदा वा आफ्नो खेतबारीमा अरुलाई बोलाएर काम लाउँदा यस्तै देखिन्थ्यो ।

## धेनोः शीलज्ञः क्षीरं भुङ्क्ते ॥१४०॥

जसरी गाईको स्वभाव हेरेर त्यही अनुसारको व्यवहार गर्दै दुहुनेले दूध दुहुन्छ त्यसरी नै राजा वा राष्ट्र प्रमुखको स्वभाव हेरेर राष्ट्रसेवकहरू आफ्नो स्वभाव बनाउँदै उद्देश्य पूरा गर्ने गर्दछन् ।

## क्षुद्रे गुह्यप्रकाशनं आत्मवान्न कुर्वीत (कुर्यात्) ॥१४१॥

क्षुद्र (कञ्जुस, नीच, छुच्चो, गरिब, निष्ठुर) लाई आत्मवान (आफ्नै पुरुषार्थले आत्मोन्नति गरेका व्यक्ति) ले गोप्य कुरा नबताउनु ।

## आश्रितैरप्यवमन्यते मृदुस्वभावः ॥१४२॥

गलत व्यक्तिलाई पनि खुशी पार्न खोज्ने अती नरम स्वभावको व्यक्तिलाई आफन्तले पनि अनादर गर्दछन् ।

व्याख्या:- जो व्यवस्थापक हुन्छ उसले सबैलाई खुशी पार्न सम्भव हुन्न । गल्ती गर्नेलाई दण्ड र राम्रो गर्नेलाई प्रोत्साहन दिनु नै पर्ने हुन्छ । यसो गरिएन भने राम्राले पनि उसलाई आदर गर्न छाड्दछन् ।

## तीक्ष्णदण्डः सर्वैरुद्वेजनीयो भवति ॥१४३॥



कठोर दण्डले सबैलाई कष्टप्रद वा उद्वेलित बनाउँदछ ।

व्याख्या:- सामान्य अपराधमा कठोर दण्ड नदिनू । अपराधीलाई यसरी दण्ड दिनु कि उसले गरेको अपराध अनुसार उसलाई दिइएको दण्ड कम वा बढी नहोस् ।

## यथार्हदण्डकारी स्यात् ॥१४४॥

दण्डाधिकारी अपराध हेरी अपराधीलाई दण्ड दिने खालको हुनु पर्दछ ।

## अल्पसारं श्रुतवन्तमपि न बहु मन्यते लोकः ॥१४५॥

गम्भीर छैन वा आफूले अध्ययन गरेको विद्या अनुसार आफ्नो मन र स्वभाव बदल्न सकेको छैन भने धुरन्धर विद्वानलाई पनि मानिसले त्यति वास्ता गर्दैनन् ।

व्याख्या:- जुन विद्याले मन प्रभावित हुँदैन त्यसले स्वभाव पनि प्रभावित हुँदैन । मन र स्वभाव बदलिएन भने विद्याको दुरुपयोग हुन्छ र त्यस्तो विद्या आर्जन गरेको व्यक्ति लामोसमयसम्म लोकप्रिय हुन सक्दैन ।

## (सारं माहाजनः संग्रहः पीडयति) ।

धेरै मानिसलाई सहभागी बनाएर कुनै नीति कार्यान्वयन गर्न खोजियो भने त्यसले उद्देश्य प्राप्ति हुँदैन ।

व्याख्या:- अत्यावश्यक कुरामा बाहेक अरुकुरामा जनमत संग्रह वा बृहद् छलफल नगर्नू । बहुमतले सधैं सही निर्णय नै गर्दछ भन्ने हुँदैन । संसारमा केही देशले जनमत संग्रह गरेरै अस्तित्व गुमाएका दृष्टान्त पाइन्छन् । मत दिँदा विवेकको प्रयोग गरिन्छ भन्ने मान्यता हुन्छ, तर व्यवहारमा यो कतै पनि सही भएको पाइन्न । सिद्धान्तमा जेसुकै भनिए पनि व्यवहारमा मतदाताको विवेक अरु धेरै कुराबाट प्रभावित भई स्वतन्त्र हुने नगरेको पाइन्छ ।



## अतिभारः पुरुषमवसादयति ॥१४६॥

क्षमताभन्दा बढीको जिम्मेवारी वा कामको बोझले मानिसलाई थकित बनाउँदछ र सोचेका जस्तो प्रतिफल दिँदैन ।

व्याख्या:- कर्मको बोझ दुई किसिमको हुन्छ शारीरिक र मानसिक । परिश्रम शारीरिक र उत्तरदायित्व मानसिक बोझ हो । जब कर्मबोझले क्षमताको सीमा नाघ्दछ तब मानिस अविवेकी बन्न थाल्दछ ।

## यः संसदि परदोषं शंसति स स्वदोषबहुत्वं प्रख्यापयति ॥१४७॥

जसले राजसभा (वा संसद) मा व्यक्तिगत आग्रह वा पूर्वाग्रह राखी कसैमाथि बिनाप्रसङ्ग लाञ्छना वा दोष लगाउँदछ, उसले आफैँलाई अपराधी घोषित गर्दछ ।

व्याख्याः- कसैको नीजि जीवनप्रति बिनाप्रसङ्ग हस्तक्षेप वा टिकाटिप्पणी गर्ने व्यक्ति वा अप्रमाणित आरोप लगाउने व्यक्ति कुनै पनि सभा, बैठक आदिमा उपस्थित भइरहन योग्य हुँदैन, निकाल्नू । संसद, सभास्थल वा बैठक सृजनशील वा सम्बन्धित विषयवस्तुभन्दा बाहिर गएर आरोप प्रत्यारोप गर्ने स्थल होइन ।

**आत्मानमेव नाशयति अनात्मवतां कोपः ॥१४८॥**

कुसंस्कारमा हुर्केका अविवेकी मानिसले गर्ने क्रोध, तिनैको आत्मकल्याण नाशक हुने गर्दछ ।

व्याख्याः- कुनियत भएका मानिस सत्य लुकाउन चिच्याउने गर्दछन्, सार्वजनिक सभामा उधूम मच्चाउने गर्दछन्, तिनमा सत्यलाई सहन सक्ने क्षमता नै हुँदैन । जसले सामान्य विवादलाई व्यवस्थापन गर्न जान्दैन, उल्टो उछाल्दछ, त्यसले राज्य व्यवस्थापन गर्न सक्दैन । चाँडै रिसाउने व्यक्तिले चाँडै प्रतिक्रिया दिन्छ, चाँडै प्रतिक्रिया दिने व्यक्तिसँग दिगो सोच हुँदैन । एउटा असल नेता जहिले पनि प्रशंसाप्रिय हुनुभन्दा आलोचनाप्रिय हुनुपर्दछ । बुद्धिमान मानिस आलोचनाबाट सुध्रन्छ भने प्रशंसाबाट बिग्रन्छ, त्यसैले आलोचनामा रिसाउने गर्न हुन्न ।



**नास्त्यप्राप्यं सत्यवताम् ॥१४९॥**

सत्यप्रिय मानिसलाई कुनै पनि प्राप्य कुरा अप्राप्य हुँदैन ।

व्याख्याः- सत्य कुरा नै पाइ सकेपछि मिथ्या संसारप्रति मानिसमा लोभ नै बाँकी रहँदैन ।

**साहसेन न कार्यसिद्धिर्भवति ॥१५०॥**

भौतिक शक्ति वा मुढे बलले मात्र काम बन्दैन ।

व्याख्या:- बुद्धिहीन कर्म गर्नु भनेको दु:साहस गर्नु हो, प्रतिफल हात लाग्दैन । नीति विरुद्धका नचाहिँदा सन्त्रास पैदा गराउने सबैखाले राजनैतिक सिद्धान्त आततायी सिद्धान्त हुन् । यी क्षणिक हुन्छन् ।

## (साहसे लक्ष्मी(खलु श्री)र्वसति) ।

बुद्धि सहितको बलमा लक्ष्मीको वास हुन्छ ।

## व्यसनार्तो विस्मरत्यप्रवेशेन ॥१५१॥

कुनै पनि व्यसन (कुलत) भएको व्यक्तिको मन अस्थिर हुने हुनाले उ हरहमेशा कर्तव्यबाट विचलित हुने गर्दछ ।

## नास्त्यनन्तरायः कालविक्षेपे ॥१५२॥

समयको दुरुपयोगमा निर्विघ्नता हुँदै हुँदैन । समयमा काम नसक्नु भनेको नै बाधालाई हुल्नु हो ।

व्याख्या:- कुनै पनि देशमा विकासको मापन त्यो देशले समयलाई दिने महत्वबाट निर्धारण हुने गर्दछ । बनेका सडक बढानेदेखि नयाँ सडक बनाउँदासम्मका काम तोकिएको समयमा तोकिएकै मापदण्डमा भइरहेका छन् कि छैनन् आदि जस्ता कुराले नै देशको विकासको गति मापन हुने गर्दछ । यहाँ पञ्चायतकालदेखि उत्थान गरिएका योजना गणतन्त्र कालसम्म आइपुग्दा पनि यथास्थितिमै देखिन्छन् । पञ्चायतकालमा पनि नाली सफा गरेर निस्केको फोहोर फेरी नालीमै खसेर नभरिँदा सम्म सडक किनारमा थुपारिन्थे अहिले पनि त्यसरी नै थुपारिन्छ । मेलम्ची जस्ता आयोजना कति वर्षमा सकिनु पर्दथ्यो ? कति वर्ष लाग्यो ? व्यवस्था बदलिए तर मानसिकता बदलिएन, मानिसले समयलाई चिन्न नै चाहेनन् । समय अनुसार बदलिनुपर्ने मान्छे समयलाई बदल्न खोजिरहेछ । समय अनुसार अर्थ आर्जन गर्न सिक्नुपर्नेमा समयलाई बेचेर अर्थ आर्जन गरिरहेछ ।

## अशंसय विनाशात् संशय विनाशः श्रेयान् ॥१५३॥

अनिश्चित मरणभन्दा निश्चित मरण श्रेष्ठ हुन्छ ।

व्याख्याः- सय वर्ष भनी तोकिएको आयु हो, को कहिले कसरी मर्दछ निश्चित छैन, संशय छ । यस्तो मरणभन्दा देश, धर्म र सत्यको रक्षाका लागि स्वेच्छाले गरिने बलिदान (मरण) श्रेष्ठ हुन्छ ।

## अपरधनानि निक्षेप्तुः केवलं स्वार्थम् ॥१५४॥

व्यक्तिगत वा सार्वजनिक नासो राख्नेले यदी उत्तरदायित्व सोच्दैन भने उसले खाली स्वार्थ मात्र सोचिरहेको हुन्छ ।

व्याख्याः अरुको गरगहना, वा धनसम्पत्ति नासो राखी दिने कुनै व्यक्ति वा देशका सम्पत्ति पुस्तान्तरण गर्ने जिम्मेवारी लिएका राज्यका संयन्त्रहरू "मैले राखेको नासो जस्ताको तस्तै" यसको धनीलाई वा भावी पुस्तालाई सुम्पनु पर्दछ भनेर सोच्दैनन् भने ती "के गरी नासो पचाउन पाइन्छ" भनेर नै सोचिरहेका हुन्छन् । गाईको थुनमा टाँसिएको भएपनि जूकाले दूध होइन रगत नै पिउँदछ । जल्दाबल्दा कुरालाई हेर्नु पर्दा राजनैतिक दल एक आपसमा मिलुन् र निर्विवाध ढङ्गले राज्य चलाउन् भन्ने जनचाहना हुन्छ । जनचहना राज्यको नासो हो । यसलाई लत्याउनु भनेको पनि नासो पचाउनु नै हो । जुन कुरा एकाध घण्टापछि नै असत्य प्रमाणित हुन्छ त्यसलाई भव्य तामझाम गरेर साँढे डुक्रे जसरी डुक्रँदै सत्य बताउन र बनाउन श्रोत र साधनको खर्च हुनु भनेको पनि नासो पचाउन खोज्नु सरह हो । जनतासँग आशा किनेर तिनलाई नैराश्यता बेच्नु अनि भूकम्पले भन्दाबढी थङथिलो हुनेगरी तिनको विश्वास हल्लाउनु पनि नासो पचाउनु सरह हो ।

## दानं धर्मः ॥१५५॥

दान दिनाले आत्मकल्याण हुन्छ ।

**(अपरधनानपेक्षं केवलमर्थदानं श्रेयः) ।**

बदलामा केही पाउने आश नगरी धन दान गर्नु श्रेष्ठ दान हुन्छ ।

**अनार्यागतोऽर्थवद्विपरीतोऽनर्थभावः ॥१५६॥**

अनार्य (अज्ञानी) समाजमा चलेका व्यर्थका प्रचलनले मानव समाज नष्ट हुन्छ ।

व्याख्याः- अनार्यको शाब्दिक अर्थ अश्रेष्ठ हुन्छ । तत्काललाई फाइदाजनक वा आनन्ददायक जस्ता लागे पनि दीर्घकालीन प्रभावको विश्लेषण नगरी लहैलहैमा चलाइएका वा चलेका प्रचलनले तथा बसाउन खोजिएका वा बसेका परम्पराले समाज नै तहसनहस हुन्छ ।



**(न्यायागतोऽर्थः) ।**

न्यापूर्वक कमाइएको धन नै धन (अर्थ) हो ।

**(तद्विपरीतोऽर्थाभासः) ।**

यसको विपरीत तरिकाले वा अन्यायपूर्वक कमाइएको धन, धन जस्तै लाग्ने धनको प्रतिविम्ब मात्र हो, टिकाउ हुँदैन ।

**यो धर्मार्थौ न पीडयति स कामः ॥१५७॥**

जे गर्नाले धर्म र अर्थलाई विकृत बनाउँदैन त्यो गराइ नै “काम” हो ।

व्याख्याः- जिभ्रो, नाक आदि इन्द्रियले गर्ने रस, गन्ध आदिको उपभोगलाई काम भनिन्छ । काम कस्तो गर्ने भन्ने विषयमा गीतामा श्रीकृष्ण भन्नुहुन्छ–“धर्माविरुद्धो भूतेषु कामोऽस्मि–म जीवमा पाइने धर्मको

अविरोधी काम हुँ" । इन्द्रियले गर्ने उपभोग वा कर्म, धर्म र धनको विरोधी हुनु हुँदैन । यहाँ सबभन्दा विचारणीय कुरा के छ भने इन्द्रियले गर्ने उपभोगमा कुनै न कुनै रूपमा वा केही न केही मात्रामा धन र धर्मको क्षय भइरहेको हुन्छ नै । यसैले अर्को सत्कर्मले त्यसको परिपूर्ति गर्नु पर्दछ ।

**(तद्विपरीतः कामाभासः) ।**

यस विपरितको काम भान (भ्रान्ती) मात्र हो, दुःखदायी हुन्छ ।

**तद्विपरीतोऽनर्थसेवी ॥१५८॥**

धर्म र अर्थका विरोधी कामले अनर्थ (अशान्ति र व्यर्थमा जीवन सकिने) हुन्छ ।

**ऋजुस्वभावो जनेषु दुर्लभः ॥१५९॥**

मानिसमा इमान्दारिता कमै पाइन्छ । 

**अवमानेनागतमैश्वर्यमवमन्यते साधुः ॥१६०॥**

इमान्दार वा सज्जन व्यक्ति आफ्नो मानमा आँच आउने धनसम्पत्तिलाई तृणसमान ठानी अस्वीकार गर्दछन् ।

**बहूनपि गुणानेको दोषो ग्रसते ॥१६१॥**

(मानिसमा भएका) अनेकौं गुणलाई पनि एउटै दोषले खाइदिन्छ ।

व्याख्याः- राजा वा कार्यकारी प्रमुख जतिसुकै इमान्दार भएपनि उसले नियुक्त गरेका कुनै एउटा पदाधिकारी बेइमान भयो भने त्यो दोष उसैलाई लाग्दछ । अतः आफू स्वयं इमान्दार भई इमान्दार सहयोगीहरु खोजी खोजी बनाउनु पर्दछ । "मेरा को छन् र ?" भन्ने तर भएभरका उपायले धनसम्पत्ति बटुल्ने व्यक्तिलाई आसेपासे वा सहयोगी बनाउने व्यक्ति राजनेता बन्न सक्दैन ।

घरमूली भएपछि पालिएको कुकुरले खान पाएन वा त्यसले कुनै बदमासी गऱ्यो भने पनि दोष घरमूलीलाई नै लाग्दछ । यसैगरी नेता गतिला भएनन् भने त्यसको दोष सिद्धान्त र तन्त्रलाई लाग्दछ ।

## महात्मना परेण साहसं न कर्तव्यम् ॥१६२॥

सत्यनिष्ठ महात्माहरूले सत्य रक्षा जस्तो कठिन कार्यमा अरुको सहयोगको अपेक्षा नगरी आफैं लागि पर्नु पर्दछ ।

व्याख्या:- सिँहलाई म एक्लै छु, कमजोर छु भन्ने चिन्ता कहिल्यै हुँदैन । सत्यनिष्ठहरू मिलेर समूह नै बनेछ भनेपनि त्यहाँ कोही नेता हुँदैन, सबै समान हुन्छन्, सत्यता नै नेता हुन्छ । समग्रमा भन्नुपर्दा मानिसले त्यस्तो मत वा सिद्धान्तको अनुसरण गर्नु पर्दछ, जहाँ कुनै व्यक्ति नेता हुँदैन, सत्यता (वा पद्धति) ले नै समूहको नेतृत्व गरिरहेको हुन्छ ।

## कदाचिदपि चरित्रन्न लङ्घयेत् ॥१६३॥



कुनै पनि हालतमा चरित्रमा दाग लाग्न नदिनू ।

## क्षुधार्तो न तृणं चरित सिंहः ॥१६४॥

भोकले मर्लान्त भएपनि सिँहले घाँस खाँदैन ।

## प्राणादपि प्रत्ययो रक्षितव्यः ॥१६५॥

ज्यान नै दिएर भएपनि आफ्नो आचरण, ज्ञान, यश आदिको रक्षा गर्नु पर्दछ ।

## पिशुनः श्रोता पुत्रदारैरपि त्यज्यते ॥१६६॥

छुल्याहा (गोप्य कुरा लाएर कसैलाई उचाल्ने र पछार्ने स्वभाव भएको, एकातिरको कुरा धुतेर अर्कोतिर लगेर सुनाउने जासुस) व्यक्तिलाई (एकदिन न एकदिन) श्रोता (वा अनुयायी), छोरा र स्वास्नीले पनि त्याग्दछन् ।

## बालादप्यर्थजातं शृणुयात्॥१६७॥

उपयोगी कुरा बालकका पनि सुन्नु ।

व्याख्या:- बोल्ने को हो मतलब नगर्नू, हितकारी वचन जसका मुखबाट सुनेपनि त्यो ग्रहणीय हुन्छ ।

## सत्यमप्यश्रद्धेयं न वदेत्॥१६८॥

सत्य कुरा भएपनि त्यो कुरा अश्रद्धालु (कुपात्र) लाई नभन्नू ।

व्याख्या: अन्धभक्तिमा सत्यता प्रवेश गर्न असम्भव हुन्छ । मानिस जुन् धार्मिक वा राजनैतिक वा आर्थिक कुराको अन्धभक्त हुन्छ, उ त्यसबाहेक अरु कुनै कुरा पनि सत्य होइन वा हुँदैन भन्ने अन्धो सोचले ग्रस्त हुन्छ । यसैले कुनै अपराधको आरोप लागि आफ्ना गुरु जेल चलान हुँदा पनि ती सँगसँगै गिरफ्तारीको विरोध गर्न जाने गर्दछन् । अपराधको सजायँ काटेर कैदमुक्त हुने अपराधीलाई अन्धभक्तहरु फूलका माला लिएर स्वागत गर्न पुग्दछन् । अन्धभक्तिमा भित्रभित्रै अपराध जन्मने र हुर्कने गर्दछ । बुझेर श्रद्धा गर्नेलाई मात्र श्रद्धालु भनिन्छ । लहैलहैमा वा देखासिकीमा उर्लने श्रद्धा खहरेको भेल जस्तो क्षणिक हुन्छ । त्यसैले सत्यकुरा वास्तविक श्रद्धालुलाई मात्र भन्नु पर्दछ ।



## (नाग्निमिच्छता धूमस्त्यजते) ।

आगो चाहनेले धुवाँलाई त्याग्दैन ।

व्याख्या: जहाँ सत्यता हुन्छ त्यहाँ त्यसलाई नमान्ने (अश्रद्धालु) पनि हुन्छन् । सत्यलाई बचाएर लैजान सक्नु नै बुद्धिमानी हुन्छ । सत्यकुरा सत्पात्रले मात्र ग्रहण गर्न सक्दछ, अतः सत्य कुरा सत्पात्रलाई मात्र बताउने गर्नु पर्दछ ।

## नाल्पदोषाद् बहुगुणास्त्यजन्ते॥१६९॥

सामान्य वा थोरै दोषका कारण धेरै गुणलाई त्यागिँदैन ।

व्याख्या: व्यक्ति दोषरहित हुन प्रायः असम्भव हुन्छ किन कि आगो र धुवाँ सँगसँगै निस्कने गर्दछ । त्यसैले गुणलाई ग्रहण गर्नू र दोषलाई वेवास्ता गर्नू । चन्द्रमामा पनि दाग छ नि छैन र ? ।

## विपश्चित्स्वपि सुलभा दोषाः॥१७०॥

जतिसुकै विद्वान भएपनि उसमा कुनै न कुनै दोष वा खोट देखाउन मानिसलाई सजिलो हुन्छ ।



व्याख्याः- काम गर्नेबाट नै भूल हुन्छ भन्ने कुरा मानिसले बिर्सन्छ र परछिद्रान्वेषी भएर अरुको निन्दा गर्न लालायित हुन्छ । भूल नै नगर्ने वा दोष नै नभएको मानिस संसारमा कोही पनि हुँदैन ।

## नास्ति रत्नमखण्डितम्॥१७१॥

संसारमा यस्तो कुनै रत्न छैन जसमा खोट नभएको होस् ।

व्याख्याः- जस्तासुकै व्यक्तिमा पनि कुनै न कुनै खोट निकाल्न सकिन्छ ।

## मर्यादातीतं न कदाचिदपि विश्वसेत्॥१७२॥

सामाजिक मर्यादा एवं विधिको शासन नमान्ने व्यक्तिलाई कहिल्यै विश्वास नगर्नु ।

## अप्रिये कृतं प्रियमपि द्वेषं भवति ॥१७३॥

शत्रूले गरेका राम्रा कुरा पनि हानिकारक हुन्छन् ।

## नमन्त्यपि तुलाकोटिः कूपोदकक्षयं करोति ॥१७४॥

झुकेर वा डोरीले बाँधिएर कुवा वा इनारमा खसेका गाग्री, बाल्टिन आदिले उल्टो कुवाकै पानी नै रित्याइ दिन्छ ।

व्याख्याः-चोरले ओढेको रामनामीमा सत्यता हुँदैन, पेसा लुकाउने माध्यम मात्र बनिरहेको हुन्छ । यसैले अस्वाभाविक व्यवहार वा अति नम्रताबाट जोगिनु पर्दछ । यस्तो नम्रतामा खराबी र चापलुसी हुन्छ । चापलुसी गरिन्छ भने त्यसमा अवश्य नै स्वार्थ हुन्छ ।

## सतां मतं नातिक्रमेत् ॥१७५॥



सत्यनिष्ठ व्यक्तिको सिद्धान्तलाई नलत्याउनु ।

व्याख्याः-अविवेकी व्यक्तिलाई गर्न हुने कि नहुने भन्ने समस्या कहिल्यै पर्दैन । जो विवेकी छ परेको बेलामा उ सत्यनिष्ठ व्यक्तिको नै अनुशरण गर्ने गर्दछ । किन कि विवेकले कहिल्यै असत्यको अनुशरण नै गर्दैन ।

## गुणवदाश्रयान्निर्गुणोऽपि गुणी भवति ॥१७६॥

बैगुनी वा निर्गुणी पनि गुणीसँगको लामो सङ्गतले गुणी हुने गर्दछ ।

व्याख्याः-सिकर्मी, डकर्मी, विद्यार्थी आदि सबै जान्नेसँगको सङ्गतले आफू पनि जान्ने भइरहेका हुन्छन् । यसैले जोसँग केही गुण छ, जोसँग केही न केही राम्रा कुरा सिक्न पाइन्छ, सङ्गत त्यसैको नै गर्नु पर्दछ ।

## क्षीराश्रितं जलं क्षीरमेव भवति ॥१७७॥

दूधसँग मिसिएको पानी पनि दूध नै हुन्छ ।

## मृत्पिण्डोऽपि पाटलिगन्धमुत्पादयति ॥१७८॥

गन्ध ग्रहण गर्न असमर्थ माटाको डल्लोले पनि
पाडरीको फूलको सङ्गतिले गर्दा त्यसकै जस्तो बास्ना दिने गर्दछ ।

व्याख्याः-गन्धहीन वा दुर्गन्धी माटोमा पनि मगमग बास्ना आउने फूल उम्रन सक्दछ । पाडरीको बोट वरिपरि रहेको माटो पनि झरेका पाडरीका फूलले गर्दा सुगन्धित हुन पुग्दछ ।

## रजतं कनकसंगात् कनकं भवति ॥१७९॥

सुनसँग मिसिएपछि चाँदी पनि सुन बन्न पुग्दछ ।

व्याख्याः-गुणहीन व्यक्ति पनि गुणीको संगतले गुणी बन्न पुग्दछ ।



## उपकर्तर्यपकर्त्तुमिच्छत्यबुधः ॥१८०॥

दुष्ट बुद्धिका व्यक्ति आफूलाई उपकार गर्नेलाई पनि अपकार गर्ने स्वभावका हुन्छन् ।

## (तद्विपरीत बुधः) ।

बुद्धिमानमा यसको विपरित गुण हुन्छ ।

व्याख्याः- उपकारको बदला तिर्न चाहनु भनेको प्रकारान्तरले उ पनि सङ्कटमा परोस् भन्ने चाहन गर्नु हो । यस सम्बनधमा रामचन्द्रले हनुमानलाई भन्नु भएका कुरा उल्लेख गर्नु उपयुक्त हुन्छ-" हे हनुमान ! लङ्का जित्न र सीतालाई फर्काउन तिमीले ममाथि जुन उपकार गरेका छौ, म चाहन्छु मैले यसको प्रत्युपकार गर्न नपरोस् । प्रत्युपकारको चाहना गर्नु भनेको मित्रलाई सङ्कटग्रस्त भएको देख्न चाहनु हो । किन कि मद्दत सङ्कट पर्दा नै गर्ने गरिन्छ" ।

## न पापकर्मणामाक्रोश भयम् ॥१८१॥

पापीलाई लोकले गर्ने वा दिने प्रतिक्रियाको वास्ता हुँदैन ।

व्याख्याः-जसलाई मानिसले के भन्लान् ? भन्ने डर हुँदैन उ लोक-सेवा र लोक-राजनीतिका लागि योग्य हुँदैन । “दुनियाँले के भन्दछ के मतलब ?” हरेक कुरामा यसो भन्न थालिएपछि समाज पतन हुन्छ अर्थात् वास्तविक अर्थमा “समाज” भन्ने नै रहँदैन । सुरुवाल फुकाल्दा तालि बजाएपछि मानिस लँगौटी पनि फाल्न थाल्दछ । वालक होस् वा वृद्ध वा जवान नै किन नहोस्, जसको गरेपनि, प्रशंसा गर्दा बुद्धि पुऱ्याइएन भने पछि पछुताउनु पर्दछ । सज्जन भए उ प्रशंसा प्रति तटस्थ हुन्छ र सदाचार एवं सत्कर्मबाट विमुख पनि हुँदैन । जसले जतिसुकै फुक्र्याए पनि उ कर्त्यव्य पथबाट विचलित हुँदैन । तर, मूर्ख रहेछ भने संसारलाई नै मूर्ख बनाउँदछ । मूर्ख वा पागलको व्यवहारमा ताली बजाउनेहरुलाई महामूर्ख भनिन्छ । त्यसैले सज्जन वा मूर्ख कसैको पनि आवश्यकताभन्दा बढी प्रशंसा नगर्नू ।

## उत्साहवतां शत्रवोऽपि वशीभवति ॥१८२॥



उत्साह (उच्च मनोबल) हुनेका शत्रु पनि वशमा हुन्छन् ।

## विक्रमधना राजानः ॥१८३॥

बुद्धि सहितको पराक्रम नै राजाको धन हो ।

## नास्त्यलसस्यैहिकामुष्मिकम् ॥१८४॥

अल्छी राजालाई न वर्तमानमा सफलता मिल्दछ न त भविष्यमा नै ।

## निरुत्साहैवं पतति ॥१८५॥

उच्च मनोबल छैन भने अनायाश पाइने उपलब्धी पनि पाइन्न ।

## मत्स्यार्थीव (मत्स्यार्थिवज्) जलमुपयुज्यार्थं गृह्णीयात्॥१८६॥

माझीले पानीसँग जुधेर माछा पाए जसरी नै समस्यासँग जुधेर आफूलाई बचाउँदै उपलब्धी हासिल गर्नू ।

## अविश्वस्तेषु विश्वासो न कर्तव्यः॥१८७॥

अविश्वासिला वा परीक्षा गरी विश्वस्त हुन नसकिएका व्यक्तिको विश्वास नगर्नू ।

## विषं विषमेव सर्वकालम्॥१८८॥

विष जहिले पनि विष नै हुन्छ, कहिल्यै अमृत हुँदैन ।

## (आर्यार्थेमेव नीचस्य संसर्गः) ।

प्रभूका कामका लागि (राज्य चलाउन) मात्र नीचसँग सङ्गत गर्नू ।



## अर्थसिद्धौ वैरिणं न विश्वसेत्॥१९०॥

धन कमाउन शत्रुको विश्वास नगर्नू ।

## अर्थाधीन एव नियतसम्बन्धः॥१९१॥

उद्देश्य वा स्वार्थ वा अर्थ नै मानिस मानिसका बीचमा हुने सम्बन्धको कारण हो ।

## शत्रोरपि सुतस्सखा रक्षितव्यः॥१९२॥

शत्रुकै छोरो भए पनि, यदि उ मित्र छ भने उसलाई रक्षा गर्नु पर्दछ ।

## यावच्छत्रोश्छिद्रं पश्यति तावद्धस्तेन वा स्कन्धेन वा वाह्यः॥१९३॥

उसका कमजोरी पत्ता नलाग्दासम्म शत्रुलाई नजिस्क्याउनू, थुमथुम्याइ रहनू, प्रशंसा गर्दै उचाली रहनू ।

## शत्रुं छिद्रे परिहरेत्॥१९४॥

कमजोरी पत्ता लगाएपछि उसँगको सम्बन्ध विच्छेद गर्नू वा उसको कमजोरीमाथि प्रहार गर्नू ।

व्याख्या: शत्रुसँग परिस्थिति प्रतिकूल हुँदा कछुवा र अनुकूल हुँदा सर्प जस्तो व्यवहार गर्नू ।

## आत्मच्छिद्रं न प्रकाशयेत्॥१९५॥

आफ्ना कमजोरी शत्रुलाई भनक समेत लाग्न नदिनू ।

## छिद्रप्रहारिणश्शत्रवः॥१९६॥



हरेक शत्रु प्रतिपक्षका कमजोरीमै आक्रमण गर्ने गर्दछन् ।

व्याख्या:- अरुका कमजोरी माथि प्रहार गर्ने व्यक्तिलाई नै शत्रु भनिन्छ ।

## हस्तगतमपि शत्रुं न विश्वसेत्॥१९७॥

आफूले समातेको वा आफ्नो शरण आएको शत्रुको पनि विश्वास नगर्नू ।

## स्वजनस्य दुर्वृत्तं निवारयेत्॥१९८॥

आफन्तका वा आफ्ना पक्षका वा आफूले नियुक्त गरेका मानिसका खराब आदतलाई छुटाउनू ।

व्याख्या:	विद्वान मानिस आफ्ना मानिसको खराब आदत छुटाउनतिर लाग्दछ भने मूर्ख छोप्नतिर लाग्दछ ।

## स्वजनावमानोऽपि मनस्विनां दुःखमावहति ॥१९९॥

बुद्धिमान व्यक्तिलाई आफन्त वा आफ्ना मानिसको अपमानले दु:खी बनाउने गर्दछ ।

व्याख्या:	जो मूर्ख छ वा आफैँ खराब छ उ अरुको अपमानमा खुशी हुने गर्दछ ।

## एकाङ्गदोषः पुरुषमवसादयति ॥२००॥

दोष (वा रोग) एउटै अङ्गमा भएपनि त्यसले पूरै शरीरलाई पीडा दिने गर्दछ ।

व्याख्या:- राज्यको कुनै एउटा अङ्ग वा पदाधिकारी खराब भयो भने त्यसले पूरै राज्य संयन्त्रलाई पीडा दिन्छ ।



## शत्रुं जयति सुवृत्तता ॥२०१॥

शत्रुलाई सदाचारले मात्र जित्न सकिन्छ ।

व्याख्या:- सदाचार बाहेक अरु कुनै कुराले पनि राज्यलाई एक ढिक्का बनाई राख्न सक्दैन । राज्य एक ढिक्का भएन भने कुनै पनि किसिमको शत्रुलाई परास्त गर्न सकिन्न । शत्रु कहिले रोगको रुपमा, कहिले भ्रष्टाचारको रुपमा, कहिले धर्मको रुपमा, कहिले जातको रुपमा र कहिले मानिसको रुपमा प्रकट भइरहने गर्दछ ।

## निकृतिप्रिया नीचाः ॥२०२॥

नीच मानिस सज्जन मानिसप्रति कपटपूर्ण व्यवहार गर्ने स्वभावका हुन्छन् ।

व्याख्याः- अरुलाई होच्याउन र कुरा काट्न मन पराउने र अरुको अवनतीमा रमाउन चाहने स्वभाव नीच मानिसको स्वभाव हो ।

## नीचस्य मतिर्न दातव्या ॥२०३॥

नीचलाई उपदेश वा बुद्धि नदिनू ।

व्याख्याः- नीच व्यक्ति आफूले पाएको उपदेश वा बुद्धि वा ज्ञानलाई अभिमान बढाउन, गलत प्रयोजनमा खर्च गर्न र अरु मानिस वा जीव वा प्रकृतिको शोषण गर्न प्रयोग गर्दछ ।

## तेषु विश्वासो न कर्तव्यः ॥२०४॥

तिनको (नीचको) कहिल्यै विश्वास नगर्नू ।

व्याख्या : नीच व्यक्तिको मन कलुषित हुन्छ । उसले माया गरेको जस्तो गर्दछ तर उसको त्यो माया बकरेले पशुपंक्षीप्रति मार्ने बेला नहुँदासम्म गर्ने माया जस्तै हुन्छ । मायामात्र होइन नीचले गर्ने रीसमा पनि शुद्धता हुँदैन । यसैगरी उसले व्यक्त गर्ने मोह, दया, उपकार, दुःख आदि सबै भावमा समेत स्वार्थ लुकेको हुन्छ ।

## सुपूजितोऽपि दुर्जनः पीडयत्येव ॥२०५॥

असल व्यवहार गरेपनि दुर्जन अवसर पाउनासाथ अरुलाई दुःख दिन छाड्दैन ।

व्याख्याः गोब्रेकीरा बैठक कोठामा टिक्दैन, गोबर खोज्दै बाहिर निस्कन्छ । चन्दन मिसिएको माटो हाली कस्तूरी मिसिएको जलले सेचन गर्दै सुनको गमलामा रोपे पनि गन्धेभार बास्ना आउने बन्दैन । अपवादमा बाहेक संस्कार र ज्ञानले निखारिएको वा ननिखारिएको व्यक्ति बीस वर्षको उमेरसम्म जेजस्तो बनी सक्दछ, आजन्म त्यस्तै हुन्छ, बदलिंदैन । ए यस्ता कुरा त पछि सिकिहाल्छन् नि भनी सिकाउनु पर्ने कुरा नसिकाई

अल्छी गर्नु वा निचमार्नु ठूलो गल्ती हुन्छ । यो उमेरलाई "मेल्टिङ्ग पट" को उमेर भनिन्छ । धुपौरालाई फुटाएर पछि गाग्रो बनाउन सकिन्न ।

**चन्दनादीनपि दावोग्निर्दहत्येव ॥२०६॥**

डँढेलोले चन्दनका वृक्षलाई पनि डढाउँदछ ।

**(शिरसि प्रस्थाप्यमानो वह्निर्दहत्येव)**

टाउकामा राखेर सन्मान गरेपनि आगोले आफ्नो सन्मान गर्नेलाई पनि जलाउन छाड्दैन ।

**कदापि पुरुषं नावमन्येत ॥२०७॥**

कहिल्यै कुनै पनि मानिसलाई अपमान नगर्नू ।



**क्षन्तव्यमिति पुरुषं न बाधेत् ॥२०८॥**

क्षमा गर्न सकिने वा क्षम्य विषय छ भने मानिसको चित्त नदुखाउनू, क्षमा गर्नू ।

**(क्षमन्त इति पुरुषान् न बाधयेत्)**

क्षम्य र अक्षम्य हेरेर व्यवहार गर्नू, जसले गर्दा कसैमाथि अन्याय वा अत्याचार हुन नपुगोस् ।

**(चन्दनादपि जातो वह्निर्दहत्येव)**

चन्दनबाट निस्केको आगोले पनि अरुलाई जलाउँदछ नै ।

**भर्त्राधिकं रहस्युक्तं वक्तुमिच्छन्त्यबुद्धयः ॥२०९॥**

बुद्धिहीन मानिस आफ्ना मालिक (राजा) सँग एकान्तमा गरिएका गम्भीर राजकीय कुरा पनि सार्वजनिक गरिदिने गर्दछन् ।

व्याख्या: यस्तो गोप्य निर्णय जथाभावी रूपमा बाहिर लेराउने व्यक्ति तीन थरी हुन्छन् । (क) बुद्धिहीन व्यक्ति अथवा व्यक्तिसँग भएको क्षमताले नधान्ने किसिमका कुनै पद पाएकाहरू । (ख) यसो गर्दा म माथि जान पाउँदछु कि भनी महत्वाकांक्षा पलाएका व्यक्ति र (ग) अरु कसैका गुप्तचरहरू । नेपालको परिप्रेक्ष्यमा प्रमुखरूपमा तेश्रो र त्यसपछि दोश्रो कारणले गर्दा गोप्य निर्णयहरू बाहिर चुहिने गर्दछन् । महत्वपूर्ण पदमा बस्ने व्यक्ति बुद्धिहीन हुँदा राज्यलाई हुने हानी भन्दा विश्वास गरिएको व्यक्ति अरु कसैको गुप्तचर हुँदा राज्यलाई हुने हानी बढी हुन्छ ।

## अनुरागस्तु फलेन सूच्यते ॥२१०॥

मुखको चापलूसीले होइन कि फल (वा व्यवहार) ले कसैप्रतिको अनुरागको वास्तविकता देखिने गर्दछ ।



व्याख्या : सुख र दुःखमा मानिसले कस्तो व्यवहार गर्दछ त्यसबाट मात्र उसले गर्ने माया थाहा हुन्छ, बोलीबाट होइन । आँशु त गोहीका आँखाबाट पनि झर्दछन् नै । तपस्या त बकुल्लोले पनि गर्दछ नै ।

## आज्ञाफलमैश्वर्यम् ॥२११॥

ऐश्वर्यको फल आज्ञा हो ।

व्याख्या : संसारमा त्यसैका कुरा अरुले मान्दछन् वा अनुशरण गर्दछन् जसले आफ्नो इज्जत र धन दुवै कुरा जोगाउन सकेको हुन्छ । सदाचारहीन मानिसलाई क्षणिक स्वार्थका लागि मात्र अनुशरण गरिन्छ ।

## दातव्यमपि बालिशः क्लेशेन परिदास्यति ॥२१२॥

मूर्ख मानिस दान पनि देखासिकीमा मात्र दिने गर्दछ ।

व्याख्या: जे कर्मलाई आत्माले स्वीकार गर्दैन, त्यो कर्म कुनै पनि हालतमा धार्मिक हुँदैन । दान दिएको, सहायता गरेको, श्राद्धादि गरेको, सप्ताह लगाएको आदिजस्ता कुरा जसले भित्री मनबाट गर्दछ उसले त्यसको प्रचारप्रसार चाहँदैन । जसले कलुषित सोचले यस्ता कार्य गर्दछ उसले बढी प्रचारप्रसार गर्दछ । बाउबाजेले गर्दथे त्यसैले बाध्य भएर गरेको भनी श्रद्धा नगरी जेसुकै धर्मकर्म गरेपनि त्यसको फल पाइन्न । शरीरका अङ्ग, अनुहार, व्यवहार र बोलीबाट मानिसले गरिरहेको धर्मकर्मप्रतिको श्रद्धा थाहा हुन्छ । यज्ञमा चरु होम्दा तस्बिरतिर ध्यान दिइन्छ वा दिन लगाइन्छ जबकी त्यसबेला यज्ञदेवतासँग आशिर्वाद लिने समय हुन्छ ।

## महदैश्वर्यं प्राप्याप्यधृतिमान् विनश्यति ॥२१३॥

पाएको ठूलो ऐश्वर्य वा वैभव पनि अधैर्यशाली व्यक्तिले नष्ट गर्दछ ।



व्याख्या: संसार विचित्रको हुन्छ । विवेक र मेहनत दुवै हुनेको समृद्धि हुनु त स्वाभाविक नै हो तर विवेकहीन वा पापीको पनि समृद्धि हुन्छ । ऐश्वर्य वा समृद्धि प्राप्त गर्न शारीरिक र मानसिक मेहनत नगर्नेले आफूले पाएको ऐश्वर्य वा समृद्धिलाई लामो समय टिकाउन सक्दैन । मेहनत नगरी धनी हुनेहरुमा फोस्रो आडम्बर र नचाहिँदो प्रतिस्पर्धा अस्वाभाविकरुपमा देखिने गर्दछ, धैर्यता हुँदैन । ती अरुभन्दा आफूलाई ठूलो देखाउन परिश्रम नगरी प्राप्त भएको धनलाई माध्यम बनाउने गर्दछन् र अन्तमा नष्ट हुन्छन् ।

## धृत्या जयति रोगान् ॥

धैर्यशाली व्यक्तिले रोगलाई समेत जित्दछ ।

व्याख्या: धैर्यता त्यो व्यक्तिसँग मात्र हुन्छ जसले इन्द्रिय र मनलाई नियन्त्रणमा राख्न सक्दछ । इन्द्रियलाई छाडा छोडे शारीरिक र मनलाई छाडा छोडे मानसिक रोग लाग्दछ ।

## नास्त्यधृतेरैहिकामुष्मिकम् ॥२१४॥

अधैर्यशालीको वर्तमान र भविष्य कष्टदायक हुन्छ ।

## गुणवानपि क्षुद्रपक्षस्त्यज्यते ॥

असत्यलाई मन पराउने नीच मानिस, जतिसुकै गुणवान् भएपनि त्याज्य हुन्छ ।

व्याख्या: कसैको गुणगान गाउनु पर्दा मूल आधार उसको सत्यनिष्ठता हुनु पर्दछ । लोकव्यवहार हेर्दा सत्यवान्को जमातले असत्यवानलाई र असत्यवान्को जमातले सत्यवान्लाई कहिल्यै मन पराउँदैन । (नेतालाई गाली गर्नु अघि ऐनामा अनुहार हेर्ने गर्नू) ।



## न दुर्जनैः सह संसर्गः कर्तव्यः ॥२१५॥

दुर्जनसँग घनिष्ठ सम्बन्ध नगाँस्नू ।

व्याख्या: शक्ति र धन पाएपछि दुर्जनहरू सज्जनसँगको सङ्गतले चोखो हुन खोज्दछन्, यतिखेर सज्जनले जोगिनु पर्दछ । ती नाम चलेका सज्जन व्यक्तिसँग टाँसिएर तस्बिर खिचाउँदै आफू पनि सज्जन भएको भ्रम फैलाउन सामाजिक सञ्जालमा त्यूता फोटा हाल्ने गर्दछन् । मन्दिर , चर्च आदिमा धाएका; गुरु, पादरी आदिलाई सम्मान गरेका अनि दान, दातव्य आदि दिएका तस्बिर बेचेर आफ्नो कुकर्म र कुनियत लुकाउन खोज्दछन् । हाम्रो दुर्भाग्य भनौं अथवा समयको खेल भनौं वास्तविक सज्जनहरूको भने विश्वभर खँडेरी पर्न थालेको छ ।

## शौण्डहस्तगतं पयोऽप्यवमन्येत ॥२१६॥

जँडयाहाको हातबाट दिइएको दूध पनि जाँड समान नै हुन्छ ।

व्याख्याः दुष्टमा देखिने एकाध गुण पनि दूषित हुन्छन् । त्यसलाई उपकार ठान्ने नगर्नू । सोचमा मलिनता भएको व्यक्तिले दिएका अमृतमा पनि विषाक्त भावना मिसिएको हुन्छ ।

## कार्यसङ्कटेष्वर्थव्यवसायिनी बुद्धिः ॥२१७॥

कर्तव्य पथमा वाधा आउँदा त्यसलाई पन्छाउने काम बुद्धिको हो ।

व्याख्याः बुद्धिको परीक्षा सङ्कटकालमा हुन्छ, सामान्य अवस्थामा होइन । "ओहो फलानो त क्या चलाख यार !" भन्दछौं । चलाख हुनु धूर्त हुनु हो बुद्धिमान हुनु होइन । बिभेको काँडा भिकेको नै थाहा नहुनेगरी जसले निकाल्न सक्दछ त्यसलाई बुद्धिमान भनिन्छ । बिभेको काँडा देखाएर हल्ला गर्ने, ठूलो घाउ बनाएर सानो काँडा निकाल्ने र काँडा बिभेको बहाना गर्नेलाई चलाख भनिन्छ । हाम्रो समाज हुलाक विभागमा जागिर खाएर पनि कुस्त सम्पत्ति कमाउन सक्ने, नपढे पनि नीतिगत तहका पदमा नियुक्त हुन सक्ने, कुनै गतिलो काम नगरे पनि नमस्कार खान पाउने, भेडा वा बाँदरले जसरी मानिसका बथान अघिपछि लगाउन सक्ने, शौचालय जाँदा पनि पत्रकारलाई क्यामरा बोकेर पछि लगाउन सक्ने आदि महाधूर्तलाई चलाख भन्ने गर्दछौं । यस्ता धूर्तलाई गुरु मान्दछौं, यी सँगै अनेक कुरा सिक्दछौं र समाज अनि देश सुध्रने सपना देख्दछौं ।



## मितभोजनं स्वास्थ्यम् ॥२१८॥

ठिक्क खानु स्वास्थका लागि लाभदायक हुन्छ ।

व्याख्याः मानिस मैले खाएँ भन्दछ । तर, खाने मानिसले होइन उसभित्र रहेको अग्निले हो । शरीरको अग्निले शरीररुपी इञ्जिन चलाउँदछ । त्यसैले इञ्जिन चल्न जति चाहिन्छ ठिक्क त्यति मात्र खानपिन गर्ने (इन्धन भर्ने) गर्नू ।

## पथ्यमप्यपथ्याजीर्णे नाश्नीयात् ॥२१९॥

नपच्ने रोग लाग्दा पच्ने कुरा पनि खान हुँदैन वा अति कम खानु पर्दछ ।

## जीर्णभोजिनं व्याधिर्नोपसर्पति ॥२२०॥

पच्नेगरी वा पहिले खाएको पचेपछि भोक लाग्दा मात्र खानपिन गर्ने व्यक्तिलाई सामान्यतः रोगले सताउँदैन ।

## जीर्णशरीरे वर्धमानं व्याधिं नोपेक्ष्येत ॥२२१॥

कमजोर हुँदा वा घट्दो उमेरमा बढिरहेका रोगलाई बेवास्ता नगर्नू ।

## अजीर्णे भोजनं दुःखम् ॥२२२॥



नपचेका अवस्थामा खाना खाने गर्नु दुःखदायक हुन्छ ।

## शत्रोरपि विशिष्यते व्याधिः ॥२२३॥

रोग शत्रुभन्दा पनि बढि हानिकारक हुन्छ ।

## दानं निधानमनुगामि ॥२२४॥

दान आफ्नो क्षमता अनुसार गर्नु पर्दछ ।

## पटुतरे तृष्णापरे सुलभमतिसन्धानम् ॥२२५॥

चलाख, लोभी र स्वार्थी व्यक्तिमा अस्वाभाविकरूपमा अरुसँग घनिष्टता (मित्रता) बढाउने बानी हुन्छ ।

व्याख्या: विश्व भ्रमण गर्ने नेपालीको आफ्नै धरातल भने मूर्खतापूर्ण छ । हामी मित्रताको आधार नै स्वार्थलाई बनाउने गर्दछौं र भन्दछौं "गुहू पुछेको ढुङ्गो त काम लाग्दछ, मान्छे चिनी राख्नु पर्दछ काम लाग्दछ" । अनि त्यो सम्बन्ध (चिनेको मान्छे) को प्रयोग काम असजिलो पर्दा होइन कि स्वार्थ पूरा गर्न वा नियम मिच्न प्रयोग गर्ने गरिन्छ । विश्व भ्रमण गर्दा कतै मान्छे चिन्न पर्दैन, नियम चिने पुग्दछ । यहाँ चाहीँ नियम चिन्न पर्दैन, मान्छे चिने पुग्दछ । सम्बन्धको आधार स्वार्थ भयो भने त्यसले समाजमा विकृति मात्र जन्माउँदछ ।

## तृष्णया मतिश्छाद्यते ॥२२६॥

लोभले मानिसको बुद्धिलाई छोपी दिन्छ ।

व्याख्या: आफ्नो क्षमता, आवश्यकता र अधिकारभन्दा बढी चाहना गर्नुलाई तृषा वा लोभ भनिन्छ ।



## कार्यबहुत्वे बहुफलमायतिकं कुर्यात् ॥२२७॥

मानिसले एकैपटक धेरै काम गर्नुपर्ने अवस्था आउँदा महत्वपूर्ण र धेरै लाभदायक काम पहिले गर्नू ।

व्याख्या: महत्वपूर्ण धेरै लाभदायक काम भन्नाले आफूलाई धेरै फाइदा हुने होइन कि धेरै जनालाई फाइदा हुने काम भनी जान्नू ।

## स्वयमेवावस्कन्नं कार्यं निरीक्षेत ॥२२८॥

आफैं बिग्रिएको वा अरुले बिगारेको काम आफ्नै आँखाले हेरेर त्यसलाई सुधार्नू ।

व्याख्या: विविध कारणले असरल्ल रहेका, बिग्रेका वा भत्केका काम आफैंले गएर निरीक्षण गर्दै सम्पन्न गर्न लगाउनु पर्दछ । आफू उपस्थित नभई तेश्रो पक्षलाई नै यसको जिम्मा दियो भने त्यो काम टिक्दैन । उदाहरण :

नेपालका सम्बन्धमा मेलम्ची खानेपानी आयोजना, कन्काई आदि नदीका उद्घाटन हुन नपाई भत्किएका पुल, दशैं आए जसरी राजमार्गका पहिरा पन्छाइरहने काम आदि ।

## मूर्खेषु साहसं नियतम् ॥२२९॥

साहसका काम गर्नु मूर्खको स्वभाव हुन्छ ।

व्याख्या: याज्ञवल्क्यस्मृतिमा साहसको अर्थ दिँदै भनिएको छ "यत् किञ्चित् कर्म बलदर्पितैः क्रियते तत् साहसम्" । बलको घमण्डले गरिने जुनसुकै कर्मलाई साहस भनिन्छ । बुद्धिको सर्वथा अभाव हुने गरी वा कम प्रयोग गरी मूढेबलले गरिने कर्मलाई साहस भनिन्छ । नारदसंहिता आदि अन्य ग्रन्थमा विवेकहीन साहसलाई अपराध मानिएको पाइन्छ । "आँट चाहिन्छ आँट" भनेर लगाइने साहसको जुन अर्थ हुन्छ त्यसमा भने विवेकको समेत प्रयोग हुन्छ भनी कल्पना गरिएको हुन्छ । मूर्खमा दुई वटा विशेष गुण हुन्छन् : उ साहसिलो हुन्छ अनि प्रशंसाप्रिय हुन्छ । विगतदेखिका इतिहास हेर्दै वर्तमान समयमा भाइरस जसरी भाइरल भएका टिकटक आदि सामाजिक सञ्जालका भिडियोहरू हेर्नुहोस् अनि "गोर्खाली साहसिला हुन्छन्" को अर्थ गहिरिएर मनन गर्नु होस् । किन देश विकास भएन प्रष्ट हुन्छ ।



## मूर्खेषु विवादो न कर्तव्यः ॥२३०॥

जसलाई गर्न हुने नहुने, उचित अनुचित मतलब हुँदैन त्यस्ता मूर्खसँग वादविवाद नगर्नू ।

व्याख्या: "यो कुरा खान हुन्न" भन्यो भने मूर्खले "आफूमात्र खान यसो भन्यो" भन्दछ । "यसो गर्नुहुन्न" भन्यो भने "अरुले सिक्दछन् भनेर गर्न हुन्न भन्ने" भन्दछ । मूर्खले हरेक कुराको उल्टो अर्थ लगाउँदछ । यसैले मूर्खसँग विवाद नगर्नू । अर्को रमाइलो कुरा के छ भने मूर्खले विद्वानलाई मूर्ख ठान्दछ ।

## मूर्खेषु मूर्खवत् कथयेत् ॥२३१॥

मूर्खलाई मूर्खकै भाषामा कुराकानी गर्नु पर्दछ अर्थात् दण्डले नै तह लगाउनू पर्दछ ।

## आयसैरायसं छेद्यम् ॥२३२॥

फलामले फलामलाई प्वाल पार्नू ।

व्याख्या: मूर्खलाई उपदेश दिने होइन उसको मूर्खतालाई तह लगाउने गरी दण्ड दिनु पर्दछ । मूर्खलाई पुलपुल्यायो भने यसले देश बर्बाद हुन्छ ।

## नास्त्यधीमतः सखा ॥२३३॥

मूर्खलाई (सज्जन) मित्र पाउन सम्भव हुँदैन ।

व्याख्या: मूर्ख दुई किसिमका हुन्छन् । बुद्धि नै नहुने र भएको बुद्धि धितो राख्ने । यस्ता मूर्खले मूर्खलाई नै मित्र बनाउँदछन् किन कि मूर्खको मित्रता स्वार्थका लागि मात्र हुने गर्दछ । यी बाहिर बाहिर रडाको मच्चाउने गतिविधि गर्दछन् र भित्रभित्रै मिल्दछन् । तिनले यसो गर्दा तिनको समर्थन र विरोध गर्ने महामूर्खहरुको संख्या निरन्तर बढिरहने गर्दछ ।

## नास्ति धर्मसमः सखाः ॥

धर्म समानको मित्र अरु छैन ।

व्याख्या: मानवोचित कर्तव्य पालना गर्नु नै धर्म हो । यो बाहेक अरु केही कुराले पनि शान्ति वा स्थिर मित्रता हुँदैन ।

## धर्मेण धार्यते लोकः ॥२३४॥

धर्मले नै संसारलाई जोगाइरहेको हुन्छ ।

व्याख्या: अदृश्य शक्तिका अगाडि लम्पसार परेर मात्र धर्म हुँदैन । राम्रा काम गर्नू र नराम्रा काम नगर्नू वा गर्न नदिनू नै धर्म हो र यसैले संसार टिकिरहेको हुन्छ ।

## प्रेतमपि धर्माधर्मावनुगच्छतः ॥२३५॥

शरीरले साथ छोड्दापनि धर्म र पापले साथ छोड्दैन ।

## दया धर्मस्य जन्मभूमिः ॥२३६॥

दया नै धर्मको जन्मभूमि हो ।

व्याख्या: अरुको दुःख हटाउन प्रयाश गर्नु भनेकै दया हो । कठै ! भन्ने भावना मनबाट लोप हुँदै गएपछि धर्मको पनि लोप हुन्छ । थोरै भएपनि मानिस दयालु हुन्छन्, तिनै मार्फत धर्म टिकेको हुन्छ र त्यही धर्म मार्फत संसार टिकेको हुन्छ ।



## धर्ममूले सत्यदाने ॥२३७॥

धर्म नै सत्य र दानको जरो हो ।

व्याख्या: मानवीयता जोगाउनु नै सर्वोत्कृष्ट मानव-धर्म हो । यस बाहेकका स्वतन्त्रता, अधिकार आदिका निहुँमा गर्ने गराइने सबै उच्छृङ्खल गतिविधि अधर्म हुन् । त्यस्तो त्याग नै दान हो जसले मानवीयता जोगाउन मद्दत गर्दछ । कुनियतले कुनियत भएकालाई सर्वस्व दिएपनि त्यसलाई दान भनिन्न । दान विज्ञापनको विषय हुँदा त्यसले मानवीयता जोगिन्न र त्यो पनि दान हुँदैन । अरु कोहीसँग मागेर अरु कसैलाई केही दिनु पनि दान होइन । आफूसँग सत्य तरिकाले कमाइएको जे छ त्यसमध्येको केही वा पूरै, पश्चाताप नहुने गरी स्वेच्छिकरूपमा स्वयंले स्वामित्व परित्याग गर्नु दान दिनु हो । याद राख्नु होस् है-दान कहिल्यै

पनि मध्यस्तकर्तालाई दिइन्न । जब दानमा फौबज्जारी चल्दछ तब दानको महत्व र फाइदा समाप्त हुन्छ र यो पेसा बन्दछ ।

## धर्मेण जयति लोकान् ॥२३८॥

धर्म वा सत्यको रक्षा गरेर नै मानिस विश्वविजयी बन्न सक्दछ ।

व्याख्या: मानवीयता जोगाउनका लागि गरिएका प्रयाशको यश नै विश्वभर फैलने गर्दछ । अत्यन्त कठिन अवस्था आएमा अरुको अस्तित्व सकेर आफ्नो वा आफ्नाको ज्यान जोगाउनुलाई पाप मानिएको छैन । यस बाहेकका सबै प्रयोजनमा अरुलाई सकेर आफू उदाउन खोज्नेहरू अवश्य नासिने छन् । आश्रय दुई प्रकारको हुन्छ : शारीरिक र मानसिक । आश्रयका प्रयोजन पनि दुई किसिमका हुन्छन् : धार्मिक वा सत्य र अधार्मिक वा असत्य । स्वार्थका लागि कसैको भजन गाउनुलाई यश फैलनु भनिन्न । यश सूर्यको किरण फैलिए जसरी फैलिन्छ, बाढी वा आँधी जसरी होइन । त्यसैले बाढी वा आँधी फैलिए जसरी जे जे कुराहरु फैलिने गर्दछन् तिनको आयु छोटो हुन्छ । यहाँ अर्को एउटा गजबको उदाहरण दिइएको छ : दान लिनु र दिनु दुवै धर्म हुन् तर दिनेलिने दुवैले यसलाई पेसा बनाउनु हुन्न, बनाए कर्मको लोप हुन्छ, कर्म लोप हुनु अधर्म हो ।



## धर्मेण धर्मिष्ठं रक्षति ॥२३९॥

धर्मले धार्मिकलाई रक्षा गर्दछ ।

व्याख्या: मृत्युले पनि धार्मिक वा मानवीयता जोगाउन गरिएका कर्मको यशलाई मार्न सक्दैन ।

## धर्माद्विपरीतं पापं यत्र प्रसज्यते
## तत्र धर्मावमतिमृहती प्रसज्येत ॥२४०॥

जहाँ धर्मसँग द्वेष गर्ने पाप बलियो हुन्छ त्यहाँ धर्मको अति अपमान हुने गर्दछ ।

व्याख्या: आत्महत्या दुई किसिमको हुन्छ । कुनै पनि मानिसको प्राकृतिक आत्मामा पाप हुँदैन । तर जब आत्मालाई हत्या गरिन्छ, उसका कुरा सुनिन्न तब पाप हुन थाल्दछ ।  यो पहिलो आत्महत्या हो । आत्मा रहने शरीरलाई समेत समाप्त पार्नु दोश्रो आत्महत्या हो । दुबै आत्महत्याले मानव समाज नरकतिर धकेलिन्छ । जहाँ पाप सोच बढ्दछ त्यहाँ धर्म वा सत्य कुराको विरोध हुने गर्दछ ।

## लोक प्रशस्तः स मतिमान् ॥

व्यवहारमा कुशल व्यक्तिलाई नै बुद्धिमान् भनिन्छ ।

## उपस्थित विनाशानां प्रकृतिराकारेण लक्ष्यते ॥२४१॥

भइरहेका अनेक थरी प्राकृतिक लक्षणले पाप बढिरहेको वा नाश हुन लागेको सङ्केत दिइरहेको हुन्छ ।



व्याख्या: पापको अर्थ मठ, मन्दिर, मस्जिद, गुम्बा आदि नधाउनु वा धार्मिक वा पितृकर्म नगर्नूमा मात्र सीमित छैन । आत्माको कुरा नसुन्नु नै पाप हो । दायाँबायाँ केही नसोची अन्धानुकरण गर्नु पाप हो । आत्माको सम्बन्ध प्रकृतिसँग हुन्छ । अर्थात् प्रकृति ईश्वरको आत्मांश हो । यसैले प्रकृतिले भविष्यमा हुने राम्रा वा नराम्रा परिवर्तनको पूर्व सङ्केत दिने गर्दछ ।

## आत्मविनाशं सूचयत्यधर्मबुद्धिः ॥२४२॥

अधार्मिक बुद्धिले मानव नासिदैछ भन्ने कुराको सङ्केत दिने गर्दछ ।

## नास्ति पिशुनवादिनो रहस्यम् ॥२४३॥

अर्काको निन्दा गर्ने मानिसले गोप्य कुरा लुकाउन सक्दैन ।

## पररहस्यं नैव श्रोतव्यम् ॥२४४॥

अकारण अर्काका गोप्यकुरा सुन्ने आदत नबसाउनू ।

व्याख्या: जुन कुरा उसैका फाइदा वा बेफाइदासँग मात्र सम्बन्धित हुन्छ र आफ्नो कर्तव्यसँग सम्बन्धित हुँदैन त्यस्तो कुरालाई अर्काको कुरा भनिन्छ ।

## वल्लभस्य कारकत्वमधर्मयुक्तम् ॥२४५॥

मालिकसँग मुखमुखै लाग्ने खालको सेवकत्व हुनु अधार्मिक हुन्छ ।

व्याख्या: नेपालीमा एउटा उखान छ "बाउभन्दा छोरो जान्ने, खुकुरीभन्दा कर्द लाग्ने" । खुकुरीको दापका छेउमा घुसारिएका नमोडिने खालका ससाना चक्कुलाई कर्द भनिन्छ । व्यवहारिक ज्ञानका लागि अपवादमा बाहेक बाउभन्दा छोरो कहिल्यै पनि जान्ने हुँदैन । अरु ज्ञानमा बाउभन्दा छोरो जान्ने हुन्छ, हुन सक्दछ, हुनु पनि पर्दछ । यसैगरी अपवादमा बाहेक खुकुरीभन्दा कर्द कहिल्यै धारिलो हुँदैन । बाउमा वा खुकुरीमा गुण खिइनु वा नहुनु वा धर्म नहुनु जस्ता अवस्थामा यसको विपरीत परिस्थिति हुन्छ । यसले पूरै समाजमा अस्तव्यस्तता लेराउँदछ । मालिकले धर्म वा सत्य बाहेक अरु कुनै कुरालाई मालिक मानेपछि सेवकहरु गतिछाडा हुन थाल्दछन् । हाकिमहरू गतिछाडा भएपछि तिनका चालक वा सेवकहरू मालिक हुन थाल्दछन् ।

## स्वजनेष्वतिक्रमो न कर्तव्यः ॥२४६॥

सत्यधर्ममा रहेका व्यक्तिले आफ्ना हितैषीको कहिल्यै उपेक्षा नगर्नू ।

व्याख्या: अधार्मिक शाषक, अगुवा र गुरुले अधार्मिक सेवक वा अनुयायीहरूको संख्या मात्र बढाउँदछ । अधार्मिक अनुयायीहरूको संख्या बढ्नु भनेको देशभक्ति र सदाचार सकिनु हो । यस्तो समाजले राजनेता वा आदर्श मानिस जन्माउन सक्दैन । गधाहरुमध्येको उत्तम गधालाई अथवा

चोरहरुमध्येको कम चोरलाई मालिक वा गुरु मानेर बस्न समाजले विवश हुनु पर्दछ ।

## स्वजनेष्वतिकामो न कर्तव्यः ॥

हितैषीहरूसँग कहिल्यै स्वार्थका कुरा नगर्नू, तिनका स्वार्थी कुरा पनि नसुन्नू । परिवार वा देश बिग्रने प्रमुख कारण नै यही हो ।

## मातापि दुष्टा त्याज्या ॥२४७॥

शत्रूतापूर्ण व्यवहार गर्ने आफ्नै आमा पनि त्याग गर्न लायक हुन्छे ।

व्याख्या: सन्तानसँग वैरभाव राख्ने स्वभाव भएकी आमालाई शास्त्रमा "सर्पिणी" उपनाम दिइएको छ । किन कि पोथी सर्पले आफ्नै बच्चालाई समेत खान्छ । यहाँ अपि शब्दले "आमा त त्याज्य हुन्छिन् भने अरुका के कुरा गर्नू ?" भन्न खोजिएको हो । आयुर्वेदमा "मानिसमा विभिन्न पशुका स्वभाव जन्मजात रूपमा हुन्छन् र विवेकलाई फल्न, फुल्न र स्वतन्त्र राख्न सकिएन भने यी स्वभाव उजागर हुन्छन्" भनिएको छ ।



## स्वहस्तोऽपि विषदिग्धश्छेद्यः ॥२४८॥

विषाक्त भएपछि आफ्नै हात पनि काटेर फाल्नु पर्ने हुन्छ ।

व्याख्या: खराब भएपछि जतिसुकै नजिकको नाता भएपनि त्यो त्याज्य हुन्छ नत्र आफ्नै विनाश हुन्छ ।

## परोऽपि च हितो बन्धुः ॥२४९॥

आफन्त नभएपनि आफ्नो भलो गर्दछ भने अपरिचित व्यक्तिलाई पनि मित्र मानेर सम्बन्ध गाँस्नु पर्दछ ।

व्याख्याः राम्रो नराम्रो जे कुरामा पनि प्रशंसा गर्ने आफन्त भन्दा राम्रो गर्दा हौस्याउने र नराम्रो गर्दा जँगर मार्ने पराइ धेरै उत्तम हुन्छ ।

## कक्षादप्यौषधं गृह्यते ॥२५०॥

ओखती निर्जन बनबाट पनि बटुलेर लेराइन्छन् ।

व्याख्याः उपकारी व्यक्ति सांसारिक दृष्टिले अनुपयुक्त भएपनि (वैरागी भएपनि) अपहेलनीय भने हुँदैनन् ।

## नास्ति चौरेषु विश्वासः ॥२५१॥

चोरमाथि कहिल्यै विश्वास नगर्नू ।

व्याख्याः अन्यायपूर्वक जेसुकै बटुले पनि बटुल्ने जति सबै चोर हुन् । जस्तै : अनुचित फाइदा लिने ब्यापारी, घुस लिने राजा वा उसका कर्मचारी, चापलुसी वा मसिनो स्वरले कुरा गर्ने वकिल, कर्तव्यपालना नगर्ने कर्ता, वास्तविक धर्म प्रचार नगर्ने साधुसन्त, वास्तविक शिक्षा नदिने शिक्षक वा प्रध्यापक, कु-राजनीति सहेर धर्म मात्र प्रचार गर्दै रमाउने सन्तमहन्तहरू, कुशासन सहने पत्रकार, तलबभत्ता खुवाउनका लागि बनाइएका कुनै पनि आयोग वा समितिका सदस्य आदि सबै चोर हुन् । यी सबैभन्दा ठूलो चोर सेवाको नाममा अधिकार क्षेत्र (टी.ओ.आर.) भन्दा बाहिर गई अनेक कुराको चाहना गर्ने चोर हो ।

## अप्रतीकारेष्वनादरो न कर्तव्यः ॥२५२॥

यसले प्रतिकार गरेन भनी शत्रुप्रति कहिल्यै उदासीन (निर्धक्क) नहुनू ।

## अप्रतीकारेषु व्यसनेष्वनादरो न कर्तव्यः ॥

जुध्न नसक्ने खालका (प्राकृतिक) विपत्तिको पनि कहिल्यै उपेक्षा नगर्नू ।

व्याख्या: जस्तासुकै प्राकृतिक विपदामा पनि विवेक नगुमाई सम्भव भएसम्मका सबै उपायले आफू पार खोज्नू, त्यसपछि अरुलाई पार गराउनू, निराश नहुनू । जहाज बिग्रँदैमा हताश नहुनू उपाय निकाली किनारासम्म आउने हरसम्भव प्रयाश गर्नू ।

## व्यसनं मनागपि बाधते ॥२५३॥

सानोभन्दा सानो दुर्व्यसन (वा कमजोरी) पनि सर्वनाशको कारण बन्न पुग्दछ ।

## व्यसनमना बाध्यते ॥

व्यसनमा फसेको मानिस नष्ट हुन्छ ।

व्याख्या: धन, सामर्थ्य र समयको दुरुपयोग गर्नु व्यसन हो । यस्ता काम गर्ने व्यक्ति ढिलोचाँडो नष्ट हुन्छन् । व्यसन शुरुमा प्रिय हुन्छ तर यसले भित्रभित्रै मानिसलाई धमिराले रुखलाई खोक्रो बनाएझैं खोक्रो बनाउँदछ । आजकलका मानिस गाँजा, चरेस आदि खानु आदिलाई मात्र कुलत ठान्दछन्, ती गलत ठान्दछन् । शरीरका कुनै पनि इन्द्रियलाई कुनै पनि विषयमा एकनासले लाग्ने आदत बसाउनु कुलत वा व्यसन हो । चाहे मोबाइलमा घोत्लियोस् वा ग्राम्यधर्ममा यी सबै व्यसन हुन् । व्यसनले मानिसलाई कुनै पनि हालतमा निरोगी भइरहन दिँदैन, यो मन्द विष समान हुन्छ । आयुर्वेदले इन्द्रियको अतिप्रयोग र अल्पप्रयोग दुवैलाई व्यसन हुन् भनी बताएको छ ।

## अमरवदर्थजातमार्जयेत् ॥२५४॥

मानिसले आफू अमर भएजसरी आजीवन आजीविकाका साधनलाई बटुली रहनु पर्दछ, अल्छी गर्न हुँदैन ।

व्याख्या: आफूमा कमजोर, बूढो, अशक्त आदि भावनालाई खेल्न नदिनू, यसले अझ बढी मानिसलाई गाल्दछ । निरन्तर कर्तव्य कर्म गरिरहनू । व्यवहारिक कर्ममा कहिल्यै बूढो नहुनू तर धर्मकर्ममा वा मानवीय धर्ममा सानै देखि बूढो हुन सिक्नू । उमेर ढल्केपछि मात्र भावना बदल्दछु भनेर कुर्दा भावना बदल्न असम्भव हुन्छ । धतुरोको बोटले जतिसुकै बूढो भएपनि सुन्तला फलाउन सक्दैन ।

## अर्थवान् सर्वलोकस्य बहुमतः ॥२५५॥

सदाचारी धनी नै सबैबाट सदा पूजित हुन्छ ।

व्याख्या: धनीहरु दुई किसिमका हुन्छन् । नियम भित्र बसेर धनी भएका र नियम मिचेर धनी भएका । यी दुवै थरी धनी पनि उदार र कञ्जूस गरी दुई दुई थरीका हुन्छन् । नियमले धनी भएका र उदार धनीबाट समाज र देशलाई सधैं लाभ प्राप्त हुने गर्दछ । तर नियम मिचेर धनी भएका, धनी तर कञ्जूस तथा नियम मिचेर धनी भएका तर उदार धनीबाट समाज र देशलाई सधैं नोक्सान मात्र हुन्छ । यस्ता धनीहरु दिनेभन्दा लुट्ने काम बढी गर्दछन् । जब समाजले यस्ता धनीलाई प्राथमिकता दिन थाल्दछ तब भ्रष्टाचार, तस्करी आदि जस्ता विकृति संस्थागत रूपमा मौलाउने गर्दछन् ।



## महेन्द्रमप्यर्थहीनं न बहु मन्यते लोकः ॥२५६॥

कङ्गाल भए स्वर्गका राजा इन्द्रलाई पनि संसारले वास्ता गर्दैन ।

व्याख्या: शास्त्रमा परिवार पाल्न नसक्ने खालको गरिबीलाई अत्यन्त निन्दा गरिएको छ । जसरी हुन्छ नियमपूर्वक धन कमाऊ । आवश्यकताको अन्त कहिल्यै हुँदैन, जन्मदा (आउँदा) जसरी नै मर्दा पनि खाली हात नै मर्नु (जानु) पर्दछ, त्यसैले सन्तोष लिने गर । खाली नबस, उद्यम गर, धन कमाऊ तर अरुको भाग खोसेर धन नकमाऊ । अरुको भाग खोसेर कमाइएको धनले कुनै पनि धर्मकर्म गर्नु फाइदाजनक हुँदैन ।

## दारिद्र्यं खलु पुरुषस्य जीवितं मरणम् ॥२५७॥

गरिबीले मानिसलाई जिउँदै मरेतुल्य बनाइ दिन्छ ।

व्याख्या: गरिबी दुई किसिमको हुन्छ धनको र मनको । धनको गरिबीलेभन्दा कुबाटोबाट धन आर्जन गरी जथाभावी खर्चगर्ने चाहना हुने मनको गरिबी बढी दुःखदायी हुन्छ । मनको गरिबीले परिवार, समाज र देशलाई नै गरिब बनाउँदछ । हजारौं खर्च गरेर किनिएका जुत्ता फेरी फेरी लगाउने तर पाँच रुपियाँ कसैलाई दान दिनुपर्दा दाँतबाट पसिना निकाल्ने धनीबाट देश र समाजले केही पनि पाउँदैन ।

## विरूपोऽर्थवान् सुरूपः ॥२५८॥

कुरुप भएपनि पैसावाल भए उ सुन्दर हुन्छ ।

व्याख्या: अनुहार जेजस्तो भएपनि धर्मपूर्वक कमाएको धनलाई धर्मपूर्वक सदुपयोग गर्ने व्यक्तिलाई लोकले लामो समयसम्म सम्झिने गर्दछ । अर्थात् धर्मपूर्वक कमाएर धर्मपूर्वक खर्च गरिने द्रव्य नै सुखदायी धन हो, अरु धन दुःखदायी हुन्छ ।

## अदातारमप्यर्थवन्तमर्थिनो न त्यजन्ति ॥२५९॥

मगन्ते स्वभावका व्यक्ति आवश्यकता नपर्दा पनि धनीसँग मागिरहने गर्दछन् ।

व्याख्या: सदुपयोग वा दुरुपयोगको परवाह नगरी अन्धाधुन्ध दान दिइन्छ भने त्यसले कहिल्यै कुनै लाभ गर्दैन । खानै नपुगे जसरी रुँदै माग्दछ र मागेको पैसाले एकछिन पछि जीवन धान्न अनुपयोगी कुरा खान्छ भने त्यस्ता माग्नेलाई दिइएको दानको के मतलब हुन्छ र ? कैयौं दाताले कति दान दिए दिए, न सडकका मगन्तेले जोगाएर सदुपयोग गरे नत महलका मगन्तेले नै । दिइएको दानको सदुपयोगिताका बारेमा बेवास्ता गरियो भने दान लिनू र दिनू दुवै ठगी पेसा हुन पुग्दछ । कलियुगमा दान दिने सत्पात्र पाउन

मुस्किल हुन्छ त्यसैले दिइएको दानलाई सदुपयोग गर्ने गरिब आदिलाई दान दिनु पर्दछ । पाएको दानको दुरुपयोग गर्ने व्यक्ति आदिलाई दान दिनु र खरानीमा होम हाल्नु उस्तै हो । माग्नेलाई पेसा बनाइयो भने त्यहाँ पनि कर्मको लोप हुन्छ, अर्थात् मानिसले काम गरेर खान छोड्दछ ।

## अकुलीनोऽपि कुलीनाद्विशिष्टः ॥२६०॥

मानव धर्ममा लागेको सामान्य कुलको व्यक्ति स्वार्थमा डुबेको कुलीन व्यक्तिभन्दा महान हुन्छ ।

व्याख्या: साँचो मानव धर्मले जात, कुल, खानदान आदिको अपेक्षा गर्दैन । अर्थात् सामान्य वा हीन कुलमा जन्मेको व्यक्ति पनि मनको धनी छ भने उ पूजनीय हुन्छ । कुलिन परिवारको दुर्जनबाट भन्दा सामान्य परिवारको सज्जनबाट राम्रा कुरा सिक्ने अवसर प्राप्त हुन्छ ।

## नास्त्यमानभयमनार्यस्य ॥२६१॥



नीचलाई समाजमा आफ्नो अपमान होला कि वा समाजले आफूलाई तिरस्कार गर्ला कि भन्ने डर नै हुँदैन ।

व्याख्या: मन फोहोर भएको मानिस बाहिरी सफाइले सफा हुँदैन । लोकलाई झुक्याइरहेको हुन्छ । गलत काम गर्ने हरेक व्यक्तिलाई समाजले तिरस्कार गर्ने गरेको भए हाम्रो देशको यस्तो हालत हुन्थ्यो र ?

## न चेतनवतां वृत्तिभयम् ॥२६२॥

व्यवहारमा कुशल र चलाख (सिप र जाँगर हुने) व्यक्तिलाई काम नपाइएला वा खान नपाइएला भन्ने चिन्ता हुँदैन ।

व्याख्या: यो सूत्रमा "चेतन" शब्दको प्रयोग भएको छ जसको शाब्दिक अर्थ सोचविचार गर्ने भन्ने हुन्छ । तर, सूत्रमा शाब्दिक अर्थले मात्र काम गर्दैन । सिप सिकेको व्यक्तिलाई सिपालु भनिन्छ र यही शब्द भित्र चेतन

शब्दको समेत अर्थ समावेश भएको हुन्छ । अल्छीलाई बढी रोग लाग्दछ किन कि उ कुनै पनि सही कामलाई दैनिकी बनाउन असक्षम हुन्छ । रोग लागेपछि न काम पाइन्छ न त काम गर्ने क्षमता नै हुन्छ ।

## न जितेन्द्रियाणां विषयभयम् ॥२६३॥

इन्द्रियहरूलाई अधिनमा राख्नेलाई इन्द्रियको प्रयोग वा उपभोगबाट पतन हुइन्छ कि भन्ने शङ्का हुँदैन ।

व्याख्या: जसले आफ्ना इन्द्रियलाई नियन्त्रण गर्न सक्दछ उसलाई केही खाएर, कतै गएर, कसैका कुरा सुनेर, केही देखेर वा केही सुँघेर दीर्घकालीन असर गर्दैन । अर्थात् उसले असरका बारेमा बुझी गलत कुराको उपभोग गर्ने बानी नै बसाउँदैन ।

## न कृतार्थानां मरणभयम् ॥२६४॥



संसारको रहस्य बुझेर आफ्नो कर्तव्य पालना गर्दै जीवनलाई सार्थक बनाइरेहका व्यक्तिलाई मर्दछु कि भन्ने डर वा चिन्ता हुँदैन ।

व्याख्या: भोगमा लम्पट व्यक्तिलाई म मरेँ भने यी कुराको उपभोग कस्ले र कसरी गर्ला भन्ने चिन्ताले नै सताउने, रोगी बनाउने र मार्ने गर्दछ ।

## कस्यचिदर्थं स्वमिव मन्यते साधुः ॥२६५॥

साधुसज्जनहरू अरुले पनि आफूले गरेजस्तै धनको सदुपयोग एवं रक्षा गरेको देख्न चाहन्छन् ।

व्याख्या: मेरो र तेरो भन्ने भावना बढेपछि सोचमा दरिद्रता पैदा हुन्छ । सोचमा दरिद्रता भएपछि चरित्रमा दरित्रता देखिन थाल्दछ । मानिसहरु "वसुधैव कुटुम्बकम्" भन्ने श्लोकको एक अंशका कुरा बढी गर्दछन् । तर पूरा श्लोकले के भन्दछ वास्ता गर्दैनन् । जस्को अर्थ यस्तो छ- "यो मेरो र यो अर्काको भन्ने सोच तुच्छ सोच हो । विशाल सोच हुनेका लागि वसुधैव कुटुम्बकम्

अर्थात् पृथ्वी नै आफन्त हुन पुग्दछ" । जेजसरी कमाएको भएपनि धन खर्च गर्न सावधानी अपनाउन जानिएन वा सकिएन भने अति चाँडो मानिस दरिद्र हुन्छ । धनलाई धुवाँ उडाए जसरी उडाउने होइन, टिक्नेगरी खर्चगर्ने आदत बसाउनू ।

## परविभवेष्वादरो न कर्तव्यः ॥२६६॥

अरुको समृद्धिलाई लोभवश ईर्ष्याको विषय नबनाउनू ।

व्याख्या: अरुको समृद्धि प्रेरणाको विषय हुनुपर्दछ ईर्ष्याको विषय हुनु हुँदैन । ईर्ष्याको विषय भयो भने मानिसहरू गलत तरिकाले धन बटुल्न थाल्दछन् । के राम्रो काम गरी कसरी आफ्नो प्रगति गर्ने भन्नेतिर भन्दा पनि रिस र डाहतिर नै बुद्धि बढी खर्च हुने गर्दछ । ईष र इर्ष्या फरक कुरा हुन् । ईषले उन्नति र ईर्ष्याले अवन्नति हुन्छ । ईर्ष्यामा रिसका कारण बुद्धि र बलको क्षय हुन्छ भने ईखमा वृद्धि हुन्छ । त्यसैले त उखान हालिन्छ "ईष नभएको मान्छे र विष नभएको सर्प काम लाग्दैन, सबैले हेप्दछन्" ।



## परविभवेष्वादरोपि विनाशमूलम् ॥२६७॥

अर्काको धनमा इच्छा (आदर) भएपछि समाज विनाशको बाटोमा अघि बढ्दछ ।

व्याख्या: अरुको असल समृद्धिलाई प्रेरणाको रूपमा नलिई ईर्ष्याको रूपमा लिने रोग फैलिएपछि समाजमा अशान्ति, पाप, दुष्कर्म र विवाद बढ्ने गर्दछ । समृद्धिको कारण गलत भए कानुनले नियन्त्रण गर्नू, असल भए प्रेरणा लिनू । उल्टो छ हाम्रो देशमा, गर्न नहुने काम गरेर धनी हुनेहरु प्रेरणाका पात्र बनाइन्छन् , स्वाभाविक समृद्धिमा भने कानुन चनाखो बन्दछ ।

## पलालमपि परद्रव्यं न हर्तव्यम् ॥२६८॥

छेस्कोजति नै किन नहोस्, अर्काको धनलाई तुच्छ सम्झी चोरी गर्नु हुँदैन ।

व्याख्या: चोरीको अर्थ विस्तृत हुन्छ । अर्काको स्वामित्वको कुरै कुरा लुकिछिपी वा जबरजस्ती आफ्नो बनाउनु मात्र चोरी गर्नु होइन । आफ्नो अधिकारको प्रयोग गर्दा अरुको अधिकार मास्नु पनि चोर्नु नै हो । विज्ञान अनुसार पनि हरेक कुराको प्रतिक्रिया हुन्छ, तर देखिन्न सूक्ष्म हुन्छ । गालामा थप्पड हान्दा गालाले पनि हिर्काउँदछ तर सूक्ष्म हुनाले थाहा हुन्न । चोरी पनि यस्तै हो । चोरिएको कुराले चोर्नेका असल स्वभाव नदेखिने गरी चोरीरहेको हुन्छ । समाज पतनतिर गइरहेको सङ्केत टिकटकका हालिएका असंख्य भिडियोबाटै थाहा हुन्छ । यी भिडियोले लाइक बटुल्ने निहुँमा सानै उमेरदेखि मानिसलाई चोर्न सिकाइरहेका छन् ।

**परद्रव्यापहरणमात्मद्रव्यनाशहेतु: ॥२६९॥**

अरुको धनसम्पत्ति चोर्दा त्यसले कालान्तरमा आफ्नो धनसम्पत्ति समेत नष्ट हुन पुग्दछ ।



व्याख्या: चोरी वा लोभ रोग हो । पहिले सामान्य कुरा चोरी गर्ने मानिस नै कालान्तरमा डाँका भएर निस्कन्छ । पचास रुपैयाँ घुस खान सिकेको व्यक्ति नै कालान्तरमा पचास करोड घुस खाने बनेर निस्कन्छ । खोकीलाई बेलैमा उपचार गरिएन भने त्यही खोकी भविष्यमा अर्बुद रोग (क्यान्सर) बन्न पुग्दछ । सानातिनालाई सात खत माफ भन्ने सोच नै गलत सोच हो । यहाँ अकबर र वीरबलको कथा प्रस्तूत गर्नु उपयुक्त हुन्छ । ढोकामा बसेको पालेले वीरबललाई भित्र अकबरले जति दिन्छन् त्यसको आधा उसलाई दिने शर्तमा दरबार भित्र जान दिएको हुन्छ । भित्र अकबरसँग वीरबलले सय कोर्रा पुरस्कार दिन अनुरोध गर्दछन् ताकि पचास कोर्रा ढोकाको पालेले पनि पाओस् । अनियमितता घटाउन घुस लिनेले होइन कि दिनेले कठोर कदम चाल्न सक्नु पर्दछ । गलत कार्यले हानी गर्दछ भन्ने भावना समाजमा विकसित नभई गलत कार्य हुन बन्द हुँदैन, अझ बढ्दै जान्छ । भगवान् बुद्ध तथा राजा पृथ्वी नारायणशाहका उपदेशमा पनि घुस लिने र दिने दुवै काम पाप हुन् र लिनेलिने दुवै देशद्रोही हुन् भनिएको छ ।

## न चौर्यात् परं मृत्युपाशः ॥२७०॥

यमराजको डोरीभन्दा चोरीको डोरी दुःखदायी हुन्छ ।

व्याख्याः चोरीले मानवीयता, धन, यश र शरीर सबैलाई विनाशतिर लैजान्छ । अतः आफूसँग भएको क्षमताले वा आफ्नो क्षमता बढाएर आय बढाउनू नसके आफूसँग जे छ त्यसैमा सन्तुष्ट हुन सिक्नू ।

## यवागूरपि प्राणधारणं करोति लोके ॥२७१॥

संसारमा प्राण धान्नका लागि त जौको खोले पनि पर्याप्त हुन्छ ।

व्याख्याः चोरी, घुसखोरी, भ्रष्टाचार, लुटपात, मारपिट, जुवा आदि सबै लोभले हुने कुराहरू हुन् । यसैले यी कुरा नियन्त्रण गर्न चाहने राजाले पहिले आफ्ना जनताको लोभी मनोवृत्तिमाथि नियन्त्रण गर्नू । चाँडै धनी बनाउने योजना समाजलाई बेच्दै उल्टो तिनलाई निष्क्रिय र गरिब बनाउन पल्केका सबै खालका कूट-व्यवसायलाई नियन्त्रण गर्नू । सपना देख्नु पर्दछ तर सपना देख्ने जति सबै जना प्रधानमन्त्री, सचिब वा बिल गेट्स हुन सम्भव छैन । खप्परमा जति छ त्यो भन्दा बढी टाउको फुटाए पनि पाइन्न ।



## न मृतस्यौषधं प्रयोजनम् ॥२७२॥

मरेकालाई ओखती काम लाग्दैन ।

व्याख्याः मानिसमा हुने विवेक नै समाजलाई जिवन्त राख्ने महा-औषधी हो । विवेकले कर्तव्य वोध गराउँदछ । शरीरलाई जोगाउने पनि यही विवेक हो । विवेकले नै मानिसलाई सबै खालका सङ्कटबाट पार लगाउँदछ । रिसलाई अगाडि र विवेकलाई पछाडि पारी गरिने हरेक निर्णयले आजीवन पछुताउनु पर्ने हुन्छ । विवेक गुमाएकालाई दिइने उपदेश विष समान हुन्छ । विवेक गुमाएको समाजलाई दिइने अधिकार देशका लागि घाँडो हुन पुग्दछ । यसैले विवेकको मूल अर्थात् स्व-धर्मलाई कुनै पनि उमेरमा र कुनै पनि अवस्थामा आजीवन नछोड्नू, सुक्न नदिनू । एकचोटी सुकेको

मूल पुनः पलाउन कठिन हुन्छ । बानी नै हराएपछि वा उत्थान नै हुन नसक्ने गरी पतन भएपछि धर्म गर्न खोज्नु वा सुध्रन खोज्नु र मरेपछि ओखती गर्न खोज्नु उस्तै हो । दुवै काम लाग्दैनन् । नेपालीमा उखान पनि छ नि ! "मरेपछि हरियो काँक्रो"- के काम ?

**न कालेन मृतस्यौषधं प्रजोजनम्॥**

स्वाभाविक मृत्युमा औषधीको कुनै प्रयोजन हुँदैन ।

**प्राप्तकालो न जीवति ।**

बेला (काल) आएपछि कोही पनि बाँच्न सक्दैन ।

**समकाले स्वयमपि प्रभुत्वस्य प्रयोजनं भवति ॥२७३॥**

सामान्य अवस्थामा आफ्नो प्रभुत्व जोगाउन नै विवेकरूपी कर्तव्य काम लाग्ने गर्दछ ।



व्याख्या: कुकर्म गरेर धन कमाउनेले त्यो धन उडाएर सक्दछ । यसबाट आफू र आफ्नो परिवारलाई त उसले विनाशको बाटोमा लैजान्छ नै समाजमा पनि अनेकौं गलत सन्देश थोपरिरहेको हुन्छ । समृद्धि र अभाव : यी दुवै अवस्थामा विवेकले मानिसलाई खहरेजस्तो नभई नदी जस्तो शान्त भएर बहन सिकाउँदछ ।

**स्वकाले स्वल्पमपि प्रभूतस्य प्रयोजनं भवति ॥**

सही समयमा गरिने सामान्य कार्यले पनि ठूलो उपलब्धी दिन्छ ।

व्याख्या: स्वास्थ्य रक्षाका लागि सामान्य नियम पालना गर्नाले लाखौं खर्च गरेर उपचार गर्नु पर्दैन । बेलैमा खोपिल्टो टाल्यो भने सडकमा ठूला खाल्टा पर्दैनन् । भल छेक्यो भने बाढी पस्दैन । राज्यले गर्नुपर्ने सामान्य काम बेलैमा गरेको नदेखिँदासम्म त्यो राज्य विकासको बाटोमा हिँडेको मानिँदैन ।

## नीचस्य विद्याः पापकर्मणि योजयन्ति ॥२७४॥

नीच व्यक्ति आफूले पाएको ज्ञान पापकर्ममा प्रयोग गर्दछ ।

व्याख्याः जुन विद्याले मानिसलाई गलत काम गर्नबाट रोक्न सक्दैन वास्तवमा त्यो विद्या नै होइन । आफूले आर्जन गरेको भन्दा फरक विषयमा विशेषज्ञ बन्न खोज्नेहरू मूर्ख हुन् । मानिसको विवेकलाई हरपल झिल्लीले छोपिरहेको हुन्छ । विद्याले आवश्यक पर्दा त्यो झिल्ली च्यातेर विवेकलाई बाहिर लेराउँदछ । पढेको छ तर विवेकको प्रयोग गर्दैन भने त्यसलाई ज्ञानखल वा पढेको मूर्ख भनिन्छ । यस्ता ज्ञानखल व्यक्ति जोसुकै भएपनि तिनको विश्वास नगर्नू । पढेका मूर्खबाट समाजले के पाउँदछ त ? भागवतमा लेखिएको छः-कुनै गाग्रोमा मसिनो प्वाल पारी त्यस भित्र घिउ हाली बालेर राखिएको बत्तीको प्रकाश गाग्रो भित्र नै सीमित हुन्छ, बाहिर प्रकाशित हुँदैन । यसरी नै ज्ञानखल (पढेर पनि आफूले पाएको ज्ञान अरुलाई नदिने र नपढेको विषयमा बकबक गर्दै हिँड्ने) मानिसलाई सरस्वतीले उसको अन्तस्करण मात्र प्रकाशित गर्नुहुन्छ, ज्ञानको प्रकाश त्यस्ता व्यक्तिबाट बाहिर निस्कन दिनु हुन्न (भागवत् १०।२।१९) ।



## पयः पानमपि विषवर्धनं भुजङ्गस्य नामृतं स्यात् ॥२७५॥

सर्पलाई दूध पिलाउनु भनेको उसको विष बढाउनु नै हुन्छ, अमृत उत्पादन गर्नु किमार्थ हुँदैन ।

व्याख्याः नीच स्वभावको मानिस पढेर सुध्रँदैन, उल्टो खुराफाती दिमाग लगाएर नयाँ नयाँ तरिकाले नीचकर्म गर्न सिक्दछ । नीचस्वभावका मानिसलाई पढाउनु भनेको उसका हातमा छुरा दिनु समान हो । मूर्खलाई विद्वान बनाइए समाजलाई नै मूर्ख बनाउँदै दुःख दिन्छ तर नबनाइए उसले मात्र दुःख पाउँदछ । आफ्नो आचरणलाई पुनरावलोकन गर्ने ईष नपलाउँदासम्म मूर्ख कालिदास पनि महाकवि कालिदास हुन सकेनन् । आचरणलाई पुनरावलोकन गरेर सुध्रने ईष दैवी कृपा नभई पलाउँदैन । धर्मका दश लक्षणलाई व्यवहारमा नउतारी गरिएको कुनै पनि अध्ययन

निष्फल हुन्छ । मानिस अध्ययनलाई पनि अर्थसँग मात्र तौलने गर्दछन् तर अर्थ नै जीवन होइन । गृहस्थको जीवन अर्थ, काम, धर्म र मोक्षको सम्मिश्रणले चल्ने गर्दछ । यसमध्ये कुनै एकलाई मात्र प्राथमिकता दिइयो भने गृहस्थ जीवन बिग्रन्छ ।

## ऐहिकामुत्रिकं वृत्तम्॥

मानिसको चरित्रले वर्तमानकालमा र भविष्यमा गहिरो छाप छाड्ने गर्दछ ।

## ऐहिकामुष्मिकं वित्तम्॥

वर्तमान र भविष्य सुखी वा दुःखी हुने कुरा मानिसको धन आर्जनको तरिकामा भर पर्दछ ।

## नहि धान्यसमो ह्यर्थः॥२७६॥

संसारमा अनाज सरहको धन अरु केही छैन ।

व्याख्या: उपनिषद् भन्दछ–अन्नं वै प्राणिनां प्राणाः, अर्थात् प्राणीहरूको प्राण भनेकै अन्न हो । आयुर्वेद लेख्दछ–अन्नको विकल्प खोज्नु उमेर घटाउनु हो ।



## न क्षुधासमः शत्रुः॥२७७॥

व्यक्तिका लागि भोक र राज्यका लागि अनिकाल समान शत्रु अरु केही हुँदैन ।

## बुभुक्षितः किं न करोति पापम् ।

भोकले पीडित मानिसले पाप किन नगरोस् ?

**वासुदेव जरा कष्टं कष्टं धनविपर्ययः ।**
**पुत्रशोकस्ततः कष्टं कष्टात् कष्टतरं क्षुधा॥ (महाभारत)**

बुढ्यौली कष्टदायक हुन्छ, धननाश कष्टदायक हुन्छ, पुत्रशोक पनि कष्टदायक हुन्छ, तर भोक सबै कष्टमध्ये बढी कष्टदायक हुन्छ ।

## अकृतेर्नियता क्षुत्॥२७८॥

अल्छीले अवश्य नै भोकका कारण मर्नुपर्दछ ।

व्याख्या: निरुद्यमी तर सुख खोज्ने अर्थात् “अल्छी तिघ्रो स्वादे जिभ्रो” भएका मानिसको जीवन दु:खदायी हुन्छ । यस्ता मानिसले आवश्यक पर्दा पनि काम गर्न सक्दैनन् । काम नगरी माम कहाँबाट आओस् ? उ घरमा बाउबाजेले कमाइ दिएको कुरा पनि व्यवस्थापन गर्न जान्दैन, अरुको हेर्दछ र उडाउँदछ अनि चाँडै सकिन्छ । अल्छी भान्छामा भएको कुरा पनि पकाएर खान जाँगर चलाउँदैन, भोकभोकै सुत्दछ । यसैले गर्दा उसलाई रोग लाग्दछ र अकालमा मर्दछ ।

## नास्त्यभक्ष्यं क्षुधितस्य ॥२७९॥

भोकले पीडित भएकाका लागि खान हुने र नहुने भन्ने कुराको मतलब हुँदैन ।

## इन्द्रियाणि जरावशं कुर्वन्ति ॥२८०॥



शरीरका इन्द्रियलाई स्वतन्त्र छाडियो भने चाँडै बुढ्यौली आउँदछ ।

## सानुक्रोशं भर्तारमाजीवेत् ॥२८१॥

जो व्यक्ति आफ्ना सेवकको मानवतालाई पनि आफ्नै मानवता सरह व्यवहार गर्दछ उही नै स्वामी बनाउन वा मान्न योग्य हुन्छ ।

**सेवितव्यो महावृक्षः फलच्छायासमन्वितः ।**
**यदि दैवात् फलं नास्ति छाया केन निवार्यते ॥**

फल तथा छाया दिने विशाल रूखको सेवा गर्नु पर्दछ । कथं कदाचित् दैववश फल लागेन भने पनि त्यसले दिने छायालाई कसैले रोक्न सक्दैन ।

## लुब्धसेवी पावकेच्छया खद्योतं धमति ॥२८२॥

लोभी मालिकको सेवा गर्नु भनेको जुनकीरीबाट आगोको आश गर्नु जस्तै हो ।

व्याख्या: कलियुगका मानिस गोरस दिने गाईलाई हैँला गर्दछन् र साँढेको दूध दुहुँदै हर्ष मनाउँदछन् ।

**नीचाश्रयो न कर्तव्यः कर्तव्यो महदाश्रयः ॥**

नीचको शरणमा नबस्नू, विशाल छाती हुनेका शरणमा बस्नू ।

**उपासना चेन्महतामुपासना ॥**

कसैको सेवा नै गर्नु छ भने विशाल छाती हुनेको सेवा गर्नू ।

**विशेषज्ञं स्वामिनमाश्रयेत् ॥२८३॥**

गुण र दोष छुटयाउन सक्ने मालिकको आश्रयमा रहनू ।

व्याख्या: कामको मूल्याङ्कन नगर्नै मालिकको आश्रयमा नबस्नू, उ चाकडी गर्नेलाई बढी र मेहनत गर्नेलाई कम प्राथमिकता दिने गर्दछ । चाकडी गर्न वा चाकडी लिन रुचाउने व्यक्तिमा काम गर्ने क्षमता हुँदैन । चाकडीबाजको मुख बढी चल्ने गर्दछ, बाख्राको पुच्छर चलेजसरी चलिरहने त्यो मुख न झिँगा धपाउन काम लाग्दछ न त लाज छोप्न नै । साँच्चिकै समस्या पर्दा चाकडी लिने र गर्ने दुवै काम लाग्दैनन् ।

**पुरुषस्य मैथुनं जरा ॥२८४॥**
**स्त्रीणाममैथुनं जरा ॥२८५॥**

पुरुषका लागि ग्राम्यधर्ममा लिप्त हुनु र स्त्रीका लागि ग्राम्यधर्ममा लिप्त नहुनु बुढ्यौलीको कारण हुने गर्दछ ।

व्याख्या: यसमा सामञ्जस्य मिलाउनका लागि नै शास्त्रले वरवधुको उमेर, लक्षण आदि हेर्नुपर्ने प्रावधान राखेको हो । मन लागेको बेलामा अरु कुनै कुरा विचार नगरी मैथुन मात्र गर्न त पशु भएर जन्मे पुग्दछ, मानिस भई जन्मेर गृहस्थ जीवन चलाउनु नै पर्दैन । पशुमा मैथुनका लागि न त उमेरको मतलब हुन्छ न त नातागोताको नै । मानिस स्वतन्त्र हुन खोज्दा पशु बन्न सक्दछ त्यसैले स्वतन्त्रता वा अधिकारको उपभोग गर्दा कतै उ पशु त बनिरहेको छैन ? भनी राज्यले विचार गर्ने गरोस् ।

**न नीचोत्तमयोर्विवाहः ॥२८६॥**

नीच र उत्तमका बीचमा विवाहसम्बन्ध हुन हुँदैन ।

व्याख्या: वैवाहिक जीवनलाई भारुण्ड चराको जीवनसँग तुलना गरिएको छ । एउटै पेट र दुई टाउका भएको प्राचीन चरा विशेषलाई भारुण्ड भनिन्छ । इन्द्रिय उपभोगमा समान सोच होस् र वैवाहिक जीवन आनन्दसँग बितोस् भनेर नै विवाहपूर्व अनेक कुरा हेरविचार गर्ने संस्कार बसाइएका हुन् । कुलको अर्थ जीवनशैली समेत हुन्छ । वर वा वधुको जीवनशैली समान होस् भनेर पनि समान कुलमा नातासम्बन्ध गाँस्नु भनिएको हो । "गृहस्थः सदृशीं भार्यां विन्देत" भनिएको छ । यसको अर्थ गृहस्थ हुन सबै किसिमले योग्य स्त्रीलाई पत्नी बनाउनू भन्ने हो । शास्त्र फेरी भन्दछ-"प्रजायै गृहमेधिनाम्" अर्थात् समाजलाई अघि बढाउन गृहस्थ धर्मको व्यवस्था गरिएको हो । वैवाहिक जीवनलाई मोजमस्तीका रूपमा मात्र लिने दम्पतिहरू बढ्दै गए भने वा गृहस्थ धर्मप्रति वैराग बढ्यो भने समाज वा सृष्टि अघि बढ्दैन । सबै जोगी वा भोगी वा रोगी भए भने तिनलाई पाल्ने चाहीँ कसले ?



**अगम्यागमनादायुर्यशःपुण्यानि क्षीयन्ते ॥२८७॥**

गमन गर्न नहुनेलाई गमन गर्दा आयु, यश र पुण्य नाश हुन्छ ।

**नास्त्यहङ्कारसमः शत्रुः ॥२८८॥**

अभिमान वा घमण्डभन्दा ठूलो शत्रु अरु हुँदैन ।

## संसदि शत्रुं न परिक्रोशयेत् ॥२८९॥

संसद् वा सभामा शत्रुलाई (नै पनि) उत्तेजित नबनाउनू ।

व्याख्या: संसद् वा सभामा व्यक्तिगत आरोपप्रत्यारोप हुन्छ भने त्यहाँ छलफल गरिनु पर्ने विषय ओझेलमा पर्दछ । रिसैरिसमा चाहिने कुरा पाखा लाग्दछन् र नचाहिने कुराहरु छलफलका विषय हुन थाल्दछन् । नेपालको राजनीति पूर्णरूपमा पराधीन छ । जसले जतिसुकै आदर्शका गफ छाँटे पनि नेपाली राजनीति आफू सक्षम भएर होइन कि अर्काको गल्तिलाई देखाएर फष्टाएको राजनीति हो । हाम्रो राजनीति “बोल्नेको पीठो बिक्दछ, नबोल्नेको चामल पनि बिक्दैन” भन्ने सिद्धान्तमा जन्मेको र हुर्केको राजनीति हो । हाम्रा नेता लफडा एउटा कुराको निकाल्दछन् र अर्को कुरा पास गर्दछन् ।



## शत्रुव्यसनं श्रवणसुखम् ॥२९०॥

शत्रुको विपत्ति सुन्दा आनन्द आउँदछ ।

## अधनस्य बुर्द्धिर्न विद्यते ॥२९१॥

(अधैर्यशाली) निर्धनसँग भएको बुद्धि पनि नष्ट हुन्छ, बढ्दैन ।

व्याख्या: धन नहुँदा प्रतिभाहरू कुण्ठित भई लोप हुन्छन् । यसबेला निराश नभई धैर्य लिन सक्नु पर्दछ । राज्यले पिछडिएका वर्गको शरीरलाई होइन शरीरभित्रको प्रतिभालाई फल्नेफुल्ने वातावरण बनाउनु पर्दछ ।

## हितप्यधनस्य वाक्यं न शृणोति ॥२९२॥

गरिबका कुरा उचित नै भएपनि कसैले सुन्दैनन् ।

**अधनः स्वभार्याऽप्यवमन्यते ॥२९३॥**

निर्धन भएपछि मानिस आफ्नै पत्नीबाट पनि अपहेलित हुन्छ ।

**पुष्पहीनं सहकारमपि नोपासते भ्रमराः ॥२९४॥**

अत्यन्त गुलियो जातको आँपको बोटलाई पनि फूल नफूलेको बेला भमराले त्यागी दिन्छ ।

**विद्या धनमधनानाम् ॥२९५॥**

गरिबका लागि विद्या नै धन हो ।

**विद्या चोरैरपि न ग्राह्या ॥२९६॥**



विद्या चोरले पनि चोरेर लान सक्दैन ।

**विद्यया ख्यापिता ख्यातिः ॥२९७॥**

विद्याले यश फैलन्छ ।

**यशः शरीरं न विनश्यति ॥२९८॥**

शरीर नासिए पनि यश नासिँदैन ।

**यः परार्थमुपसर्पति स सत्पुरुषः ॥२९९॥**

जो अरुको भलाइका लागि तत्पर रहने गर्दछ उ सत्पुरुष हो ।

**इन्द्रियाणां प्रशमं शास्त्रम् ॥३००॥**

इन्द्रियलाई शान्त राख्ने वा नियन्त्रण गर्ने शक्ति भनेकै "शास्त्र" हो ।

**अशास्त्रकार्यवृत्तौ शास्त्राङ्कुशं निवारयति ॥३०१॥**

नचाहिँदा कामकुरा गर्न मन लाग्दा शास्त्राङ्कुश (जितेन्द्रिय मन) ले त्यसलाई रोक्ने गर्दछ ।

**नीचस्य विद्या नोपेतव्या ॥३०२॥**

नीचसँग ज्ञान नलिनू ।

व्याख्या: व्यक्तिभित्र रहेको क्षमतालाई विद्याले बढाउँदछ, यो कुरा सही हो । तर, व्यक्तिसँग तुच्छ स्वभाव नै प्रमुख क्षमताका रूपमा रहेको छ भने विद्याले त्यही तुच्छ स्वभावलाई बढाउने र हुर्काउने गर्दछ । चोरले ज्ञान पाए उ ज्ञान नपाउने अरु चोरहरूभन्दा उत्कृष्ट चोर हुन्छ, नयाँ नयाँ तरिका अपनाएर चोर्न थाल्दछ, तर उ चोरी गर्न छोड्दैन अर्थात् विद्वान् हुँदैन । कुटिलता, खुराफाती, ठगी, भ्रष्टाचार, हिनामिना आदि जस्ता कुरा के कसरी गर्ने ? के कसरी यी काम गर्दा कानुनबाट जोगिन सकिन्छ जस्ता कुराभन्दा बाहेक नीच व्यक्तिबाट अरु कुरा सिक्न सकिन्न । त्यसैले पढेका नीचबाट हुने, गरिने कर्मको ज्ञान चाहीँ लिनू तर त्यसलाई आदर्श मानी व्यवहारमा उतार्ने नगर्नू ।



**म्लेक्ष्छभाषणं न शिक्षेत् ॥३०३॥**

म्लेच्छको भाषा नसिक्नू ।

**(गोमांसखादका यस्तु विरुद्धं बहु भाषते ।**
**सर्वाचार परिभ्रष्टो म्लेच्छ इत्यभिधीयते ॥)**

**म्लेच्छानामपि सुवृत्तं ग्राह्यम् ॥३०४॥**

म्लेच्छसँग पनि असल कुराहरू सिक्नु पर्दछ ।

**गुणे न मत्सरः कर्तव्यः ॥३०५॥**

घमण्डी वा असहिष्णु भएर गुणीका गुणलाई उपेक्षा नगर्नू ।

व्याख्याः गुणले नै मानिस उत्तम र अधम हुन्छ । गुणसँग प्रेम गर, कसैको शरीरसँग होइन ।

**शत्रोरपि सुगुणो ग्राह्यः ॥३०६॥**

शत्रुका पनि असल गुणहरू ग्रहणीय हुन्छन् ।

**विषादप्यमृतं ग्राह्यम् ॥३०७॥**



विषबाट पनि अमृत लिनु हुन्छ ।

**अवस्थया पुरुषः सम्मान्यते ॥३०८॥**

मानिस अनुकूल परिस्थितिमा नै सम्मानित हुने गर्दछ ।

**स्थान एव नराः पूज्यन्ते ॥३०९॥**

आफ्नो प्रभावक्षेत्रमा नै मानिस पूजिने गर्दछ ।

व्याख्याः सत्य प्रभाव हो, शक्ति प्रभाव होइन । सत्यवान् व्यक्ति जता जान्छ त्यो स्थानलाई आफू अनुकूल बनाई प्रभावित पार्न सक्दछ । सत्यहीन व्यक्ति जहाँसुकै र जहिलेसुकै असत्यको दास हुने गर्दछ । आफ्नो सत्वमा अडेको व्यक्ति नै सबैबाट पूजिन्छ, सत्वबाट पतित भएपछि उसलाई कसैले पनि मान्दैनन् । तलाउमा हुँदासम्म कमल शोभायमान हुन्छ । तर जब त्यो

उखेलिन्छ तब त्यसलाई त्यही हुर्केको पानीले गलाउँदछ र त्यसैले ताप्ने गरेको घामले सुकाउँदछ ।

**आर्यवृत्तमनुतिष्ठेत् ॥३१०॥**

मानिसले आर्य स्वभावलाई सधैं संरक्षण गर्नू ।

व्याख्या :

**कर्तव्यमाचरन् काममकर्तव्यमनाचरन् ।**
**तिष्ठति प्रकृताचारे यः स आर्य इति स्मृतः ॥**

मानवोचित कर्तव्य-कर्म गर्दै अमानवीय कर्मबाट जोगिने र विचारशील आचार तथा परम्परालाई अक्षुण्ण राख्ने व्यक्तिलाई आर्य भनिन्छ ।

**कदापि मर्यादां नातिक्रामेत् ॥३११॥**



शिष्टाचारको सीमा कहिल्यै कुनै पनि हालतमा ननाघ्नू ।

व्याख्याः जसरी मैलो लुगा लगाउन अभ्यस्त व्यक्तिलाई बस्ने समस्या हुँदैन जहाँ पनि थ्याच्च बसी दिन्छ त्यसरी नै शिष्टाचारहीन भएपछि नैतिकता बाँकी रहन्न, जे कुरा पनि आफैं जान्नेसुन्ने हुँदै फ्याट्ट फ्याट्ट गर्न थाल्दछ ।

**नास्त्यर्घः पुरुषरत्नस्य ॥३१२॥**

श्रेष्ठ मानिसको कुनै मूल्य हुँदैन ।

व्याख्याः उत्तम पुरुषबाट सूर्यबाट तेज निस्किए जसरी गुणहरू निस्किरहने गर्दछन् । गुणको कुनै मूल्य हुँदैन ।

**न स्त्रीरत्नसमं रत्नम् ॥३१३॥**

उत्तम गुणका स्त्री समानको अरु कुनै रत्न हुँदैन ।

**सुदुर्लभं रत्नम् ॥३१४॥**

संसारमा गुणी व्यक्ति रत्नसमान दुर्लभ हुन्छन् ।

**अयशो भयं भयेषु ॥३१५॥**

अबजश (लोकनिन्दा) सबभन्दा ठूलो डर हो ।

**नास्त्यलसस्य शास्त्राधिगमः ॥३१६॥**

अल्छीलाई शास्त्रज्ञान प्राप्त हुँदैन ।

व्याख्या :

**अलसो मन्दबुद्धिश्च सुखी वा व्याधिपीडितः ।**
**निद्रालुः कामुकश्चैव षडेते शास्त्रवर्जिताः ॥**

अल्छी, मूर्ख, सुखप्रिय, रोगी, सुताहा र कामुक : यी छ प्रकारका मानिस शास्त्र ज्ञान लिन सक्दैनन् ।

**न स्त्रैणस्य स्वर्गाप्तिर्धर्मकृत्यञ्च ॥३१७॥**

कामुक व्यक्तिले न धर्मकर्म गर्न सक्दछ न त सुखी नै रहन सक्दछ ।

**स्त्रियोऽपि स्त्रैणमवमन्यते ॥३१८॥**

पत्नी पनि कामुक पतिलाई अवहेलना गर्न थाल्दछे ।

**न पुष्पार्थी सिञ्चति शुष्कतरुम् ॥३१९॥**

फूलको चाहना गर्नेले (पनि) सुकेको (फूलको) विरुवामा पानी हाल्दैन ।

व्याख्या: स्त्रीहरू निश्चित समय पछि गुणहीन तर कामुक पतिलाई तिरस्कार गर्दछन् । दूधको चाहना गर्नेले गाईको सेवा गर्दछ गोरुको गर्दैन । असल स्त्रीहरू आफ्ना पति व्यवहारकुशल भएको र कुनै दुर्व्यसनमा नफसेको हेर्न चाहन्छन् । यसको विपरीत हुँदा तिनले नजानिदो किसिमले पतिलाई तिरस्कार गर्न थाल्दछन् । परिवार बिग्रने सबभन्दा कठिन अवधि भनेकै यही अवधि हो । यस बेलामा गहन परामर्श र सहमती हुन सकेन भने व्यसनमा फसेका दम्पत्ति भए ती झन् झन् व्यसनमा फस्न पुग्दछन् । इच्छा कुण्ठामा बदलिएपछि स्वर्गजस्तो हुनुपर्ने पारिवारिक वातावरण नरक जस्तो हुन पुग्दछ ।

## अद्रव्यप्रयत्नो बालुकाक्वाथनादनन्यः ॥३२०॥

जसरी भोक मेट्न बालुवा उमालेर खानु व्यर्थ हुन्छ त्यसरी नै सुख पाउनका लागि भौतिक तरिका अपनाउनु व्यर्थ हुन्छ ।



## न महाजनहासः कर्तव्यः ॥३२१॥

असल (वास्तविक) महान् व्यक्तिहरूको उपहास नगर्नू ।

व्याख्या: यससम्बन्धमा स्कन्द पुराणमा उल्लेख भएका केही कुरा राख्न उचित लाग्यो । घरमा आउने कुनै पनि भिक्षुकको उपेक्षा नगर्नू कुन असली जोगी हो र कुन नक्कली जोगी हो भनी खुट्याउने ज्ञान सबै गृहस्थसँग नहुन सक्दछ । आफूबाट गरिने उपेक्षाले लिने क्षमता मात्र भएको जोगी निराश हुँदा केही फरक पर्दैन तर कुनै दिन दिने क्षमता भएको जोगी समेत निराश हुन पुग्यो भने उसले त्यो गृहस्थको पूरा जीवन नै नैराश्यतापूर्ण बनाएर जान्छ ।

## प्रतिबध्नाति हि श्रेयः पूज्यपूज्याव्यतिक्रमः ॥

सम्मान गर्नुपर्ने व्यक्तिलाई सम्मान गर्न छाडे पछि आफ्नै सम्मान नासिन्छ ।

## न नर्मपरिहास कर्तव्यः ॥

उल्लिबिल्लि वा ख्यालठट्टालाई हाँसोको विषय नबनाउनू ।

व्याख्या: हाँसो दुई किसिमको हुन्छ : भित्रैबाट आउने र देखाउने । भित्रैबाट आउने हाँसो दुई किसिमले आउँदछ : इन्द्रिय वा मन प्रसन्न भएर तथा इन्द्रियजित बनेर । सामान्यतः शास्त्रले हाँस्नका लागि यही विधि वा अवस्थालाई उत्तम बताएका छन् । यसैगरी देखाउने हाँसो पनि दुई किसिमको हुन्छ : एउटा बाध्यात्मक र अर्को रहरको । रोग, शोक, दु:ख आदिले मन जलिरहेको हुन्छ तर त्यसलाई लुकाउन हाँसिने हाँसो बाध्यात्मक हाँसो हो । रोग निको हुन्छ भनेर वा अरुको खिल्ली उडाएर वा अरुलाई समस्यामा पारेर हाँसिने हाँसो रहरको हाँसो हो । कलियुगीन शास्त्रबाहेक प्राचीन शास्त्रमा यसले गर्ने दीर्घकालीन असरका कथा समेत उदाहरणका रूपमा पेस गर्दै यस्तो हाँसो हाँस्न निषेध गरिएको छ । आजभोलीको "जस्ट प्र्याङ्क" को हाँसोलाई शास्त्रले भने नासिने मेलो भनी बताएको छ । अर्को थरी सबै हाँसेको देखेर कुरै नसुनी वा नबुझ्री हाँसिने हाँसोलाई शास्त्रले मूर्ख-हाँसो भनेको छ । यसैगरी परपीडामा रमाएर हाँसिने हाँसोलाई पैशाच-हाँसो भनिएको छ । मनहरुका बीचमा अन्तरसम्बन्ध हुन्छ त्यसैले अर्को मनलाई पीडा दिएर हाँस्न शास्त्रले निषेध गरेको छ र ढिलोचाँडो यसको असर हाँस्नेले भोग्नुपर्दछ भनेको छ ।



## कार्यसम्पदं निमित्तानि सूचयन्ति ॥३२२॥

भावनामा हुने शुद्धताले सफलताको सूचना दिन्छ ।

व्याख्या: कुनै पनि कामको सफलताका लागि भावनामा शुद्धता अनिवार्य शर्त हुनुपर्दछ । भावनामा जति मात्रामा मिसावट हुन्छ सफलतामा र त्यसको निरन्तरमा पनि त्यति नै मात्रामा मिसावट हुने गर्दछ । स्वाभाविक रूपमा भावनामा शुद्धता हुने अवस्था निकै कम व्यक्तिसँग मात्र हुन्छ किन कि भावनामा अशुद्धता आउन सहज हुने गर्दछ । यसैले भावनालाई शुद्ध पार्न कानुनको सहारा लिने गरिन्छ । मलाई सडक बनाउने ठेक्का परेको

अवस्थामा “यो सडक मेरो पनि हो” भन्ने भावना ममा आएन भने अथवा मैले बनाएको सडक उपभोग गर्नेहरूमा “यो सडक हाम्रो पनि हो” भन्ने भावना जागेन भने मैले बनाएको सडकको आयु कम हुन्छ । विकासका आयोजनाहरू कर्मप्रति उत्तरदाई नभई ठेक्का प्रदायकहरूप्रति उत्तरदायी हुँदासम्म आयोजनाहरू टिक्ने गरी सम्पन्न हुँदैनन् । पचास करोड हिनामिना हुन्छ, कुरा बाहिर आए कानुन, ठेक्का प्रदायक निकाय आदि सबै मिली दुई करोड दण्ड तिराएको देखाएर अठचालीस करोड पचाउँदछन् । यसरी जनताका आँखामा छारो पनि हालिन्छ र हामी सबै शुद्ध पनि हुन पुग्दछौं ।

## नक्षत्रादपि निमित्तानि विशेषयन्ति ॥३२३॥

कुनै पनि कामको सफलताका लागि साइत जुराउने कामले भन्दापनि शुद्ध भावना (नियत) ले विशेष महत्व राख्दछ ।

व्याख्या:- “यो ठेक्का हात पार्न पाए यति नाफा कमाउँदथे” भन्ने नियतले पाएको ठेक्काबाट ठेकदारले लगभग त्यति नै बराबरको नाफा अवश्य कमाउँदछ तर उसले जे काम गर्दछ त्यो टिक्दैन । “यो केटासँग वा यो केटीसँग बिहे गर्न पाए यसरी नाम वा दाम कमाउँदथे” भन्ने सोचले गरिएको बिहेमा त्यसरी नै नाम र दाम कमाइन्छ तर दाम्पत्य जीवन सुखमय हुँदैन । कर्मको फल नियतसँग सम्बन्धित हुन्छ । जतिसुकै साइत जुराएर जुनसुकै काम गरिए पनि कर्म-कर्ताको नियत अनुसार नै त्यसको फल भोग्न पाइन्छ । कामको प्रकृत्ति हेरेर मुहूर्त जुराउने गर्नू । सामान्यतः नियत सफा छ भने ग्रहदशा उसैका अधिनमा हुन्छन् । व्यक्तिको होस् वा देशको, दिगो विकास हुन नियत सफा हुनै पर्दछ । समाजले गर्ने उपभोगबाट होइन कि भरपर्दो र गुणस्तरीय आयश्रोतबाट समाजको वास्तविक विकास नापिने गर्दछ ।



## न त्वरितस्य नक्षत्रपरीक्षा ॥३२४॥

चाँडै गर्नुपर्ने कामका लागि मुहूर्त जुराउनतिर नलाग्नू ।

## परिचये दोषा न छाद्यन्ते ॥३२५॥

वास्तविक रूपमा परिचित भएपछि कसैको पनि दोष गोप्य रहँदैन ।

व्याख्या: "तपाइँ उनलाई चिन्नु हुन्छ ?" भन्दा "म उनलाई राम्रोसँग चिन्दछु" भनी सजिलै जवाफ दिने चलन छ । तर जबसम्म कसैको गुण र दोषका बारेमा पूर्णरूपमा जानकारी हुँदैन तबसम्म त्यसलाई चिनेको व्यक्ति भन्न मिल्दैन । तीनपुस्ते थाहा पाउनु मात्र परिचयको आधार होइन । राम्ररी चिनेका व्यक्तिहरूका बीचमा आआफ्ना राम्रा-नराम्रा सबै कुराहरू मन खोलेर मन्थन भएका हुन्छन् । मानिसका गुण र दोष सतही हुँदैनन्, यसको परावर्तन मात्र सतहमा देखिने गर्दछ । अर्थात् "मुखले राम ! राम !, बगलीमा छुरा" अथवा "मुखले जनता ! जनता !, बगलीमा शोषण" हुनेहरूकै समाजमा बिगबिगी हुने गर्दछ ।

## स्वयमशुद्धः परानाशङ्कते ॥३२६॥

आफू अशुद्ध छ भने उ अरुलाई शङ्का गर्न थाल्दछ ।



व्याख्या: "फूलको आँखामा फूलै संसार" । जो स्वयं दोषी छ उ अरुको दोष खोतलेर पीडा दिन पाए आफूलाई श्रेष्ठ ठान्दछ । निर्दोषलाई कुनै मिथ्या आरोप लागे उ असहनीय पीडा बोध गर्दछ र आँखाबाट धरधरती आँशु निकालेर मौन बस्दछ तर दोषीलाई आरोप लगाउँदा उ अझ ठूलो स्वरले कराउन थाल्दछ । "जो चोर उसैको ठूलो स्वर" । आफूसँग जे छ मानिसले संसारलाई त्यही आँखाले हेर्ने गर्दछ ।

## स्वभावो दुरतिक्रमः ॥३२७॥

स्वभाव छाड्न निकै नै कठिन हुन्छ ।

## अपराधानुरूपो दण्डः ॥३२८॥

अपराध अनुसारको दण्ड हुनु पर्दछ ।

## कथानुरूपं प्रतिवाचनम् ॥३२९॥

प्रश्न र प्रश्न सोध्ने व्यक्ति अनुसार उत्तर दिनु पर्दछ ।

## विभवानुरूपमाभरणम् ॥३३०॥

आफ्नो आर्थिक अवस्था अनुसार शरीरमा लुगा, गहना लगाउनू पर्दछ ।

## कुलानुरूपं वृत्तम् ॥३३१॥

कुल अनुसारको आचरण वा पेसा गर्नू पर्दछ ।

## कार्यानुरूपः प्रयत्नः ॥३३२॥

काम अनुसारको प्रयाश गर्नू पर्दछ ।



**कः कालः कानि मित्राणि को देश : कौ व्ययागमौ ।**
**को वाहं का च मे शक्तिरिति चिन्त्यं मुहुर्मुहुः ॥**

आफूले शुरु गर्न आँटेको उद्यम सुहाउँदो समय छ कि छैन ? सहयोग गर्ने मित्रहरू छन् कि छैनन् ? देशको परिस्थिति अनुकूल छ कि छैन ? मेरो आयव्ययले यो उद्यमलाई धान्दछ कि धान्दैन ? मेरो अवस्था के छ ? मैले यो काम गर्न हुन्छ कि हुँदैन ? यो काम मेरो वशको हो वा होइन ? : यी कुरा कुनै पनि उद्यम शुरु गर्नु अघि पटकपटक सोच्नू । सन्तुष्ट हुने उत्तर पाए मात्र उद्यम शुरु गर्नू ।

## पात्रानुरूपं दानम् ॥३३३॥

आफूले दान दिने पात्र (व्यक्ति) कस्तो छ त्यो हेरेर मात्र दान दिनू ।

**अर्थानुरूपं दानम्॥**

आफ्नो आर्थिक क्षमता हेरेर मात्र दान दिनू ।

**वयोऽनुरूपो वेशः॥३३४॥**

उमेर अनुसारका भेषभूषा गर्नू ।

**स्वाम्यनुकूलो भृत्यः॥३३५॥**

सेवकले स्वामी अनुकूल हुनुपर्दछ ।

**भर्तृवशवर्तिनी भार्या॥३३६॥**

पतिको अनुकूलकी पत्नी हुनुपर्दछ ।



**गुरुवशानुवर्ती शिष्यः॥३३७॥**

गुरुको अनुकूलको शिष्य हुनुपर्दछ ।

**पितृवशानुवर्ती पुत्रः॥३३८॥**

पिताको अधीनमा रहने पुत्र हुनु पर्दछ ।

**अत्युपचारः शङ्कितव्यः॥३३९॥**

जोसुकैले गरेपनि अस्वाभाविक सेवा(चाकडी) प्रति शङ्का गर्नू ।

**स्वामिनि कुपिते स्वामिनमेवानुवर्तेत॥३४०॥**

मालिक रिसाए उनलाई खुशी पार्नु पर्दछ ।

**मातृताडितो वत्सो मातरमेवानुरोदिति ।।३४१।।**

आमाबाट पिटिएको बालक आमाकै काखमा गई घुस्रेर रुने गर्दछ ।

**स्नेहवतः स्वल्पो हि रोष : ।।३४२।।**

माया गर्ने (गुरु, माता, पिता आदि) बाट गलत मनसायले रिस गरिन्न ।

**आत्मच्छिद्रं न पश्यति परच्छिद्रमेव पश्यति बालिशः ।।३४३।।**

मूर्ख व्यक्ति आफ्ना कमजोरीतिर हेर्दैन अरुका कमजोरी मात्र देख्दछ ।

**सोपचारः कैतवः ।।३४४।।**



धूर्त व्यक्ति चाकडीबाज हुन्छ ।

**काम्यैर्विशेषैरुपचरणमुपचारः ।।३४५।।**

कसैको इन्द्रियजन्य कमजोरी (गलत आदत) लाई गलत मनसायले तृप्त पार्न खोज्नु भनेकै चाकडी गर्नु हो ।

**चिरपरिचतानाम् अत्युपचारः शंकितव्यः ।।३४६।।**

चिरपरिचित नै भएपनि कसैले गर्ने अति चाकडीलाई शङ्काका दृष्टिले हेर्ने गर्नू ।

व्याख्याः अरुका अधिकारमाथि निर्ममतापूर्वक प्रहार नगरी, अमानवीय तरिकाले कुनै काम नगरी, सज्जन मानिसहरूलाई उपेक्षा नगरी कहिल्यै धेरै धनी हुन सक्दैन । धनीहरूमा प्रायः जसो समाजबाट तर्कने स्वभाव हुन्छ ।

## गौर्दुष्करा श्वसहस्रादेकाकिनी श्रेयसी ॥३४७॥

बिग्रेको एउटै गाई पनि हजारौं कुकुरहरूभन्दा बढी उपकारी हुन्छ ।

## श्वः सहस्राद्द्यकाकिनी श्रेयसी ॥

भविष्यमा पाइने हजार रुपैयाँभन्दा अहिले पाइने सय रुपैयाँ श्रेष्ठ हुन्छ ।

## श्वो मयूराद्द्य कपोतो वरः ॥३४८॥

भविष्यमा पाइन सक्ने ठूलो मुजुरभन्दा अहिले पाइने परेबा श्रेष्ठ हुन्छ ।

## अतिप्रसङ्गो दोषमुत्पादयति ॥३४९॥

अति आशक्तिले अनैतिकता वा दोषलाई जन्माउँदछ ।



## सर्वं जयत्यक्रोधः ॥३५०॥

नरिसाउने व्यक्तिले सबै कुरा जित्दछ ।

## मतिमुत्तिष्ठन् जयति ॥

उन्नतिशील (विवेकशील) मानिसहरू नरिसाएर नै प्रगति गरिरहेका हुन्छन् ।

## यद्यपकारिणि कोपः कोपे कोप एव कर्तव्यः ॥३५१॥

अपकारीले गर्ने क्रोधमा क्रोध गर्नुभन्दा आफूभित्र रहेको मुख्य शत्रू अर्थात् "क्रोध" माथि चाहीँ क्रोध गर्नू ।

## मतिमत्सु मूर्ख-मित्र-गुरु-वल्लभेषु विवादो न कर्तव्यः ॥३५२॥

बुद्धिमान् व्यक्तिले मूर्ख, मित्र, गूरुजन र मालिकसँग विवाद् नगर्नू ।

**नास्त्यपिशाचमैश्वर्यम् ॥३५२॥**

ऐश्वर्य पिशाचत्वबाट अछुतो हुनै सक्दैन ।

**नास्ति धनवतां सुकर्मसु श्रमः ॥३५४॥**

धनीहरू सुकर्ममा श्रमदान गर्न रुचाउँदैनन् ।

**नास्ति गतिश्रमो यानवताम् ॥३५५॥**

बाहन वा सवारी साधनमा भरपर्नेहरू (अलिकति पनि) हिँड्न चाहँदैनन् ।

**अलोहमयं निगडं कलत्रम् ॥३५६॥**

पत्नी पतिका लागि फलाम बिनाका बेडी हुन् ।

**यो यस्मिन् कुशलः स तस्मिन् योक्तव्यः ॥३५७॥**

जो जे कुरामा सिपालु छ उसलाई त्यही काममा लगाउनु पर्दछ ।

**दुष्कलत्रं मनस्विनां शरीरकर्शनम् ॥३५८॥**

मुनिजन खराब पत्नीलाई शरीर सुकाउने पात्रका दृष्टिले हेर्दछन् ।

**अप्रमत्तो दारान् निरीक्षेत् ॥३५९॥**

उन्मत्त नभई पत्नीलाई निरीक्षण गर्ने गर्नू ।

**स्त्रीषु किंचिदपि न विश्वसेत्॥३६०॥**

स्त्रीमाथि अलिकति पनि विश्वास नगर्नू ।

**न समाधिः स्त्रीषु लोकज्ञता च॥३६१॥**

स्त्रीमा स्थिरता र लोकचरित्र (व्यवहार) को ज्ञान हुँदैन ।

**गुरूणां माता गरीयसी॥३६२॥**

गुरूहरूमध्येमा सबभन्दा श्रेष्ठ गुरू “आमा” हुन् ।

**सर्वावस्थासु माता भर्तव्या॥३६३॥**

सन्तानले सबै अवस्थामा आमाको पालनपोषण गर्नू ।



**वैदुष्यमलङ्कारेणाच्छाद्यते॥३६४॥**

मानिसको विद्वत्ता शरीरको सजावटले छोपिने गर्दछ ।

**स्त्रीणां भूषणं लज्जा॥३६५॥**

लज्जा नै स्त्रीको गहना हो ।

**विप्राणां भूषणं वेदः॥३६६॥**

ब्राह्मणको गहना वेद हो ।

**सर्वेषां भूषणं धर्मः॥३६७॥**

सबैको गहना धर्म हो ।

**भूषणानां भूषणं सविनया विद्या ॥३६८॥**

नम्रता सहितको विद्या सबै गहनामध्येमा श्रेष्ठ गहना हो ।

**अनुपद्रवं देशमाविशेत् ॥३६९॥**

उपद्रव (महामारी, दङ्गाफसाद र दैवी विपत्ति) भइरहने देशमा नबस्नू ।

**साधुजनबहुलो देशः ॥३७०॥**

अधिकांश सज्जनहरूको बासस्थानलाई भएको ठाउँलाई नै देश भनिन्छ ।

**राज्ञो भेतव्यं सार्वकालम् ॥३७१॥**



राजाको कोप-पात्र नबन्नू ।

**न राज्ञः परं दैवतम् ॥३७२॥**

राजाभन्दा ठूला देवता कुनै छैनन् ।

**सुदूरमपि दहति राजवन्हिः ॥३७३॥**

राजाको रिसरूपी अग्निले टाढा टाढाका कुरालाई जलाउँदछ ।

**रिक्तहस्तो न राजानमभिगच्छेत् ॥३७४॥**

राजा समक्ष जाँदा खाली हात नजानू ।

**गुरुं च दैवं च ॥३७५॥**

गुरु र देवता समक्ष पनि खाली हात नजानू ।

**कुटुम्बिनो भेतव्यम् ॥३७६॥**

राजाका कुटुम्बसँग शत्रूता नराख्नू ।

**गन्तव्यं च सदा राजकुलम् ॥३७७॥**

राजकुल (वा राजसभा) मा नियमित रूपमा जाने गर्नू ।

**राजपुरुषैः सम्बन्धं कुर्यात् ॥३७८॥**

राजकर्मचारीसँग सुमधुर सम्बन्ध बनाउनू ।

**राजदासी न सेवितव्या ॥३७९॥**

राजाका दासीसँग धेरै मित्रता नगाँस्नू ।

**न चक्षुषापि राजानं निरीक्षेत् ॥३८०॥**

आँखा जुधाएर राजालाई नहेर्नू ।

**न चक्षुषापि राजधनं निरीक्षेत् ॥**

राजाको (सरकारी) धनमा आँखा नलगाउनू ।

**पुत्रे गुणवति कुटुम्बिनः स्वर्गः ॥३८१॥**

सन्तान गुणले प्रसिद्ध हुँदा मातापितालाई असीमित आनन्द हुन्छ ।

**पुत्रा विद्यानां पारं गमयितव्याः ॥३८२॥**

छोरा (सन्तान) लाई विद्यामा निपुण बनाउनु पर्दछ ।

**जनपदार्थं ग्रामं त्यजेत् ॥३८३॥**

गाउँ विद्रोही हुँदा त्यसलाई छाडेर देशलाई साथ दिनू ।

**ग्रामार्थं कुटुम्बस्त्यज्यते ॥३८४॥**

गाउँको भलाईका लागि (आवश्यक परे खराब) नातागोतालाई त्याग गर्नू । (अर्थात् समूहको हीतका लागि पारिवारिक स्वार्थलाई बलिदान गर्नू) ।

**कुटुम्बार्थं पुत्रस्त्यजते ।**



नातासम्बन्धमा बाधा आउने अवस्था आए त्यस्तो खराब छोरो (वा सन्तान) लाई परित्याग गर्नू ।

**आत्मार्थं सर्वं त्यजति ॥**

आत्मकल्याणका लागि सबै कुरालाई त्याग गर्नू ।

**अतिलाभः पुत्रलाभः ॥३८५॥**

पुत्रलाभ हुनु सर्वश्रेष्ठ लाभ हुनु हो ।

**प्रायेण हि पुत्राः पितरमनुवर्तन्ते ॥**

सामान्यतः सन्तान मातापिताकै अनुसरण गर्ने हुन्छन् ।

## दुर्गतेः पितरौ रक्षति स पुत्रः ॥३८६॥

दुर्गति (शारीरिक, मानसिक, आर्थिक आदि खराब स्थिति) मा जसले आफ्ना मातापिताको रक्षा गर्दछ उसैलाई “पुत्र” भनिन्छ ।

## कुलं प्रख्यापयति पुत्रः ॥३८७॥

कुलको मानसम्मान जसले बढाउँदछ त्यही नै पुत्र हो ।

व्याख्या: कुलको मानसम्मान तबमात्र बढ्दछ जब बाउबाजेभन्दा बढी विद्वान् हुन, सुकर्मले धन कमाउन र सुयश कमाउन पुत्र सफल हुन्छ । हरेक पुराण र स्मृतिग्रन्थमा जीवित वा मृतक पितृका बारेमा बताइएका कुरा अध्ययन गर्दा सन्तानको सुयशले आफ्नो र आफ्नो कुलको पहिचान बनोस् भन्ने नै तिनको चाहना रहेको वा हुने गरेको देखिन्छ । दुर्भाग्य भनौ अथवा के भनौ, हाम्रो समाजका सबै क्षेत्रमा रहेका सन्तान आफ्ना बाउबाजेले दुःख गरेर कमाएको पद, मान र धनका भरमा रमाउन अभ्यस्त हुन थालेका छन् । बाउबाजेले जोडिदिएको छाला (जग्गाजमिन आदि) कुसन्तानका कुलतले दाइँ गर्ने खलो बनेका छन् ।



## नाऽनपत्यस्य स्वर्गः ॥३८८॥

कुपुत्र हुनेलाई स्वर्ग-सुख प्राप्त हुँदैन ।

## या प्रसूते (सा) भार्या ॥३८९॥

जसले गुणवान् सन्तानलाई जन्म दिन्छिन् तिनलाई भार्या भनिन्छ ।

व्याख्या : एउटा तर्क गरिन्छ र भनिन्छ कि “हाम्रा शास्त्रले नारीलाई सन्तान जन्माउने मेशिन बनाएको छ” । शास्त्रमा कुसन्तान जन्माउनुलाई नभई गुणवान् सन्तान जन्माउनुलाई मात्र पुरुषार्थ मानिएको छ । उब्जनी राम्रो हुन सबभन्दा पहिले खेत र बीउ राम्रो एवं गुणस्तरीय हुनु पर्दछ । सन्तान

राम्रो हुन मातापिता गुणवान् हुनै पर्दछ । खेतबारी राम्ररी खनजोत एवं मलजल नगरिएका अवस्थामा जतिसुकै उन्नत बिउ छरेपनि उब्जनी सन्तोषजनक हुँदैन । खेतबारी स्थिर हुन्छ तर त्यसमा रोपिने बीउ अस्थिर हुन्छ । पृथ्वी स्थिर हुन्छ तर त्यसमा रहने जीव अस्थिर हुन्छन् । प्रकृति स्थिर हुन्छ तर पुरुष अस्थिर हुन्छ । स्थिरतामा भन्दा अस्थिरमा विकृति बढी हुन्छ । विकृति नभएको कुरा संसारमा हुँदैन, कम विकृति हुनेले बढी विकृति हुने कुरालाई नियन्त्रण गर्नु पर्दछ । यसैले आफू संयमित भई अस्थिर पुरुषलाई नियन्त्रण गर्दै मानवीय सभ्यतालाई निरन्तरता दिन शास्त्रले विशेषतः नारीलाई स्थिर रहन र राख्न निर्देशन दिएको पाइन्छ । मेरा वा हाम्रा सन्तान यस्ता भए र उस्ता भए भन्दै रातोदिन गनगन गरिरहने हामी सबैले पहिला आफ्नो अनुहार ऐनामा हेर्नुपर्ने हुन्छ । जसले असल सन्तानको चाहना गरिरहेका हुन्छन् तिनले पनि यी कुराहरु बेलैमा मनन गरुन् । सन्तान जन्माउँदैमा बाँचुञ्जेल सुख र मरेपछि स्वर्ग पाइन्छ भन्ने भ्रम कसैले नपाल्दा हुन्छ । शास्त्रले सर्वसम्मत रूपमा यो उपलब्धी असल सन्तानबाट मात्र पाइन्छ भनेको छ ।



**तीर्थसमवाये पुत्रवतीमनुगच्छेत् ॥३९०॥**

तीर्थयात्राको समयमा पुत्रवती स्त्रीको अनुसरण गर्नू ।

**सतीर्थाऽभिगमनाद् ब्रह्मचर्यं नश्यति ॥३९१॥**

विपरीत लिङ्गी सहपाठीसँगको निकट सम्बन्धले ब्रह्मचर्य धर्म नष्ट हुन्छ । किन कि सहपाठीहरूको सम्बन्ध दाजुभाई र दीदिबहिनी समान हुन्छ ।

**घृतकुम्भसमा नारी तप्ताङ्गारसमः पुमान् ।**
**तस्मादग्निञ्च कुम्भञ्च नैकत्र स्थापयेद् बुधः ॥**

नारी भनेका घिउको भाँडो र पुरुष भनेका तातो भुङ्ग्रो जस्ता हुन्छन् । त्यसैले विद्वानले कुनै पनि नातागोताको स्त्री-पुरुषलाई लामो समय एक्लै सँगै नराख्नू ।

**न परक्षेत्रे बीजं निक्षिपेत् ॥३९२॥**

अर्काको खेतमा बीउ नछर्नू (परस्त्रीसँग नसुत्नू) ।

**पुत्रार्था हि स्त्रियः ॥३९३॥**

स्त्री : भोगका लागि नभई असल सन्तान जन्माउनका लागि सृष्टि गरिएका हुन् ।

**स्वादासीप्ररिग्रहा हि स्वदासभावः ॥३९४॥**

आफ्नी दासीलाई भोग्या बनाउनू भनेको प्रकारान्तरले आफू उनैको दास हुनु हो ।

**उपस्थितविनाशः पथ्यवाक्यं न शृणोति ॥३९५॥**

सन्निकट विपत्ति भएको (आपद्मा फस्न लागेका) व्यक्तिले हितैषीका राम्रा कुरा पनि सुन्दैन, सन्न खोज्दैन । 

**दीपनिर्वाणगन्धं च सुहृद्वाक्यमरुन्धतीम् ।**
**न जिघ्रन्ति न शृण्वन्ति न पश्यन्ति गतायुषः ॥**

नाशिन लागेको व्यक्तिलाई दियो निभेको गन्ध थाहा हुँदैन, भलो चाहनेका अर्तिउपदेश सुनिँदैन, अरुन्धती तारा देखिँदैन । विनासकाले विपरीतबुद्धिः । खराब समय आउँदा मानिसको बुद्धिले पनि उल्टो काम गर्दछ ।

**नास्ति देहिनां सुखदुःखाभाव ॥३९६॥**

भौतिक शरीरधारी प्राणीलाई कहिल्यै सुख र दुःखको अभाव हुँदैन ।

व्याख्याः मानिस आदिका जीवनमा सुख र दुःख आइरहन्छन् । त्यसैले सुखमा मात्तिने र दुःखमा आत्तिने नगर्नू । दुःख र सुख भन्ने कुरा घना जङ्गलको यात्रामा अनायास भेटिने ब्वाँसा र मृग जस्तै हुन् ।

**मातरमिव वत्साः सुखदुःखानि कर्तामिवानुगच्छन्ति ॥३९७॥**

माउको पछिपछि लाग्ने बाच्छाबाच्छी जस्तै सुख र दुःखले (कर्म) कर्तालाई पछ्याइरहेका हुन्छन् ।

**सुखस्य दुःखस्य न कोऽपि दाता परो ददातीति कुबुद्धिरेषा ॥**

मानिसलाई सुख वा दुःख अरु कसैले दिँदैन अरुले दिए भन्नु कुबुद्धि हो ।

व्याख्याः वास्तवमा व्यक्तिको गलत सोच र तदनुरुपको आचरणले दुःख तथा सही सोच र तदनुरुपको आचरणले सुख हुने गर्दछ ।

**तिलमात्रमप्युपकारं शैलमात्रं मन्यते साधुः ॥३९८॥**

सज्जनहरू सामान्य उपकारलाई पनि पहाड जत्रो ठान्ने गर्दछन् ।

व्याख्याः हनुमानले भगवान् रामलाई गर्नु उपकार गरे । त्यसपछि रमचन्द्रले हनुमानलाई भन्नु भयो :- "हे हनुमान्, तिमीले मलाई सङ्कट पर्दा गर्नु सम्मको उपकार गरेका छौ । म चाहन्छु कि तिमीले गरेका उपकारको बोझ मैमा सीमित रहोस्, यसको बोझले मै आजीवन कृतज्ञ भइ रहूँ । तर तिमीलाई प्रत्युपकार गर्न नपरोस् । किन कि प्रत्युपकारको चाहना गर्नु भनेको तिमीलाई पनि सङ्कटमा पार्न चाहनु हो । यसैले सज्जनहरू उपकार पाउन हैन गर्न लालायित हुन्छन् । उता मूर्खहरू भने "यो दिएन, त्यो दिएन, यो पाइएन र त्यो पाइएन" आदि कुरामै जीवन खेर फालिरहेका हुन्छन् ।

**उपकारोऽनार्येष्वकर्तव्यः ॥३९९॥**

उपकार भन्ने कुरा अकृतज्ञलाई गरिने कुरै होइन ।

व्याख्या: धन्यवादका शब्द पनि कनेर निकाल्ने व्यक्तिलाई वा कसैले गरेको उपकारलाई यी शब्दमा सीमित राख्ने व्यक्तिलाई उपकार गर्नुको कुनै लाभ छैन, यस्ता व्यक्तिलाई यहाँ "अनार्य" शब्दको प्रयोग भएको छ । अनार्य शब्दले हिन्दू बाहेकका मानव समाजलाई बुझाउन खोजिन्छ, यो बुझाई गलत छ ।

## प्रत्युपकारभयादनार्यः शत्रुर्भवति ॥४००॥

अनार्य व्यक्ति कसैले गरेको उपकारको बदलामा प्रत्युपकार गर्नु पर्ला कि भनेर उसँग टाढिने वा शत्रूता साँध्ने गर्दछ । संसारमा सत्पुरुषका शत्रू प्रायः तिनै व्यक्ति देखिएका छन् जो कुनै बेला कुनै किसिमले सत्पुरुषबाट उपकार गरिएका हुन्छन् ।

## स्वल्पमप्युपकारकृते प्रत्युपकारं कर्तुमार्यो न स्वपिति ॥४०१॥

आर्य (वा सत्पुरुष) अरुले गरेका सामान्य उपकारमा पनि प्रत्युपकार नगर्दासम्म राम्ररी निदाउँदैनन् ।



## न कदापि देवताऽवमन्तव्या ॥४०२॥

देवता मानेर पूजा गरिने कुनै पनि स्थान, प्रतिमा, चित्र, वस्तु वा यस्तो चरित्र भएका श्रेष्ठ व्यक्तिलाई उन्मत्त भएर वा अल्छी गरेर अपमान नगर्नू ।

व्याख्या: यसले मानवताको अपमान हुन्छ । व्यक्ति त यस्ता कर्मले पतन हुन्छ नै यस्ता कुरा सहने समाज पनि पतन हुन्छ ।

## न चक्षुषः समं ज्योतिरस्ति ॥४०३॥

आँखाको ज्योति समानको अर्को कुनै ज्योति छैन ।

व्याख्या:	यसले अरु सबै खालको ज्योतिको उपयोग गर्दछ । आयुर्वेदले भन्दछ कि धेरै उज्यालो नहेर्नू, कम उज्यालोलाई बल गरेर धेरै बेर नहेर्नू आँखाको ज्योति नष्ट हुन्छ ।

## चक्षुर्हि शरीरिणां नेता ॥४०४॥

शरीर हुने जीवको आँखा नेता हो ।

व्यख्या:	असल र खराब छुटयाएर हेर्न सक्ने आँखाको दृष्टिशक्तिलाई नै दृष्टि क्षमता भनिन्छ ।

## अपचक्षुषः किं शरीरेण ॥४०५॥

दृष्टिहीनलाई देहको सुन्दरतासँग के मतलब ? ।

व्याख्या:	ज्ञानान्धलाई जीवन नै निरर्थक हुन्छ । आँखाको ज्योति तबमात्र सार्थक हुन्छ जब त्यसलाई ज्ञानको ज्योतिले निखार लेराउँदछ । दृष्टि भएको मूर्खभन्दा दृष्टिहीन ज्ञानी उत्तम हुन्छ ।



## नाप्सु मूत्रं कुर्यात् ॥४०६॥

पानीमा पिसाब नगर्नू ।

## न नग्नो जलं प्रविशेत् ॥४०७॥

पूरै नाङ्गो भएर पानीमा नछिर्नू ।

व्याख्या:	यसले जलजन्तुले संवेदनशील अङ्गमा टोक्ने संभावना हुन्छ भने मानवीय संवेदनशीलता र मर्यादामा समेत कमी आउँदछ ।

## यथा शरीरं तथा ज्ञानम् ॥४०८॥

शरीरको जन्म परिवेश र बनोट अनुसार मानिसमा ज्ञान हुने गर्दछ ।

व्याख्या: शरीरको बनोट पञ्च महाभूत र बुद्धि सहितको मिश्रणबाट भएको हुन्छ । खानपिन, रहनसहन र आचरण वा सङ्गतले समान शरीर हुनेहरूमा पनि ज्ञानमा विविधता हुने गर्दछ ।

## यथा बुद्धिस्तथा विभवः ॥४०९॥

जसको जस्तो बुद्धि हुन्छ, त्यसको समृद्धि पनि त्यही अनुसारकै हुने गर्दछ ।

व्याख्या: अरुले गरेका वा अरुबाट उत्सर्जन हुने कुरा जति सहन सकिन्छ उती नै आफूबाट गरिने वा उत्सर्जन हुने कुरा अरुले सहने गर्दछन् । अधैर्यशील मानिसले जीवनमा कहिल्यै प्रगति गर्न सक्दैन ।

## अग्नावग्निं न निक्षिपेत् ॥४१०॥



आगोमा आगो नहाल्नू अर्थात् रिसलाई शान्त पार्न रिस नगर्नू ।

## तपस्विनः पूजनीयाः ॥४११॥

तपस्वी (समाजका मार्गदर्शक जितेन्द्रिय मानिस) सबैका लागि सधैं पूजनीय हुन्छन् ।

## परदारान् न गच्छेत् ॥४१२॥
## परदारान् मनसापि न गच्छेत् ॥

पराया स्त्रीसँग सम्पर्क बढाउने सोच पनि मनमा पलाउन नदिनू ।

## अन्नदानं भ्रूणहत्यामपि प्रमार्ष्टि ॥४१३॥

अन्न दान गर्नाले भ्रूणहत्या जस्ता पाप पनि पखालिन्छ ।

## न वेदबाह्यो धर्मः ॥४१४॥

कुनै पनि धर्म वेदविरोधी हुँदैन । अथवा वेद धर्मबाट बाहिर हुँदैन ।

## कदाचिदपि (कथंचिदपि) धर्मं निषिवेत्॥४१५॥

मानिसले कुनै न कुनै दिन कुनै न कुनै तरिकाले भएपनि धर्मको अनुष्ठान गर्ने गरोस् ।

## न कदाचिदपि धर्मं निषेधयेत्॥

धर्मको विरोध नगर्नू, नगराउनू ।

## स्वर्गं नयति सूनृतम्॥४१६॥

सत्यमा अडिग हुने कुराले मानिसलाई असीम सुख (स्वर्ग) प्रदान गर्दछ ।



व्याख्याः भौतिक सुखलाई त्यागेरै भएपनि नीतिको पालना गर्नु सत्यमा अडिग हुनु हो ।

## नास्ति सत्यात्परं तपः ॥४१७॥

सत्यभन्दा ठूलो तपस्या अरु छैन ।

**सत्यं च समता चैव दमश्चैव न संशयः ।**
**अमात्सर्यं क्षमा चैव ह्रीस्तितिक्षाऽनसूयता ॥**
**त्यागो ध्यानमथार्यत्वं धृतिश्च सततं दया ।**
**अहिंसा चैव राजेन्द्र सत्याकारास्त्रयोदश ॥**

परिस्थिति अनुसार सत्यका समता, दम,अमात्सर्य, क्षमा, लज्जा, तितिक्षा, अनसूया, त्याग, ध्यान, आर्यता, धृति, दया र अहिंसा गरी तेह्र रूप हुन्छन् ।

## सत्यं स्वर्गस्य साधनम् ।।४१८।।

सत्य स्वर्ग पाउने साधन हो ।

## सत्येन धार्यते लोकः ।।४१९।।

सत्यबाट नै संसार टिकेको हुन्छ ।

## सत्याद्देवो वर्षति ।।४२०।।

सत्यले गर्दा नै देवकृपा वर्सन्छ ।

व्याख्याः वायु, वृष्टि आदि विपरीत किन हुन्छन् भनी अग्निवेश मुनिबाट प्रश्न सोधिएकोमा आत्रेय ऋषिले दिएको जवाफ यस्तो थियो-हे अग्निवेश ! वातावरणमा जुन उल्टो गुण देखिन्छ, त्यसको मूल कारण अधर्म हो । अधर्मको मूल भनेको मानिसमा विकसित हुने असत्य भावना हो । यी दुवै कुरा अर्थात् अधर्म र असत्य भावनाको जड भनेको समाजमा नीतिहीनताले (प्रज्ञापराध) ले प्रश्रय पाउनु हो । यो कसरी हुन्छ त ? सुन । जब देश, प्रान्त, शहर र गाउँका प्रमुखहरू अथवा त्यहाँ नियुक्त प्रमुख प्रशासकहरू धर्म र नीतिको बाटो छाडी जनतासँग मिलेर अधर्म र कुनीतिका कामकुरा गर्न थाल्दछन् तब ती मातहतमा काम गर्ने किसान, शिल्पकार, ब्यापारी आदि कर्म गरेर आजीविका चलाउने व्यक्तिहरू पनि पाप र कुनीतिलाई महत्व दिन थाल्दछन् । यस स्थितिमा धर्मलाई अधर्मले ढाकी दिन्छ । यसपछि मानिसहरू धर्म र नीतिविरुद्धका कार्य गर्नुलाई नै धर्म गर्नु वा नीतिमा चल्नु भन्न थाल्दछन् । यसबाट देवता एवं प्रकृतिको अपमान हुन थाल्दछ । देवता र प्रकृतिको अपमान हुन थालेपछि कहिले धेरै पानी पर्ने, कहिले पानी नै नपर्ने, कहिले नपर्नुपर्ने बेलामा पानी पर्ने र कहिले पर्नुपर्ने बेलामा पनि पानी नपर्ने अवस्था देखिन थाल्दछ । वायु, चन्द्रको किरण र सूर्यका किरणले उल्टो लक्षण देखाउन थाल्दछन् । अर्थात् ऋतुका गुणमा विचलन आउन थाल्दछ । नचाहिने ठाउँमा पानीका मूल फुट्दछन् र

चाहिने ठाउँमा सुक्दछन् । वनस्पति एवं अनाजले दिनुपर्ने लाभ दिन छाड्दछ । यसपछि देशहरु सुनसान र मरुभूमि जस्ता हुने क्रम क्रमशः बढ्दै जान्छ ।

## नानृतात्पातकं परम् ॥४२१॥

झुटो व्यवहार भन्दा ठूलो अरु पाप छैन ।

## न मीमांस्या गुरव : ॥४२२॥

गुरुजनका कमीकमजोरी खोतल्ने नगर्नू ।

## खलत्वं नोपेयात् ॥४२३॥

मूर्खताको आश्रय नलिनू ।



## कलहं नोपेयात् ॥

बिनाकारण झगडा नगर्नू ।

## नास्ति खलस्य मित्रम् ॥४२४॥

मूर्खका कोही पनि मित्र हुँदैनन् ।

व्याख्याः मूर्खहरुमा पनि बेलाबेलामा मित्रता देखिन्छ । तर सतहमा जेजस्तो देखिए पनि तिनको त्यो मित्रता भित्रभित्रै एकले अर्कोलाई खसाल्नमा नै केन्द्रित हुने गर्दछ ।

## नास्ति कलहस्य मित्रम् ॥

कलहप्रिय मानिसका मित्र हुँदैनन् ।

## लोकयात्रा दरिद्रं बाधते ॥४२५॥

जीवनयात्रामा दरिद्रता बाधक हुने गर्दछ ।

**अधोधः पश्यतः कस्य महिमा नोपजायते ।**
**उपर्युपरि पश्यन्तः सर्व एव दरिद्रति ॥**

हरेक मानिस आफूभन्दा तल्लोस्तरको मानिसको तुलनामा सधैँ धनी र आफूभन्दा धनी मानिसको तुलनामा सधैँ गरिब हुन्छ । यसैले संसारमा कुनै यस्तो मापदण्ड छैन जसले धनी र गरिब छुट्याउन सकियोस् ।

## अतिशूरो दानशूरः ॥४२६॥

दानमा शूरो हुनु नै वास्तवमा शूरो हुनु हो ।



## गुरुदेवब्राह्मणेषु भक्तिर्भूषणम् ॥४२७॥

गुरु, देवता र ब्राह्मणहरूप्रति गरिने भक्ति मानवका गहना हुन् ।

## सर्वस्य भूषणं विनयः ॥४२८॥

सबै मानवको गहना भनेको नम्रता हो ।

## अकुलिनोऽपि विनीतः कुलीनाद्विशिष्टः ॥४२९॥

ठूलो कुलमा जन्मिएको घमण्डीभन्दा निम्न कुलमा जन्मिएको विनम्रशील व्यक्ति ठूलो हुन्छ ।

**आचारवान् विनीतोऽकुलीनोऽपि आर्यः ॥**

आचारशील र विनम्र व्यक्ति निम्न कुलमा जन्मेपनि उ आर्य हुन्छ ।

**आचारादायुर्वर्धते कीर्तिश्च ॥४३०॥**

सदाचारले आयु र कीर्ति वृद्धि हुन्छ ।

**प्रियमप्यहितं न वक्तव्यम् ॥४३१॥**

मिठा तर हानिकारक कुरा नगर्नू ।

**बहुजनविरुद्धमेकं नानुवर्तेत ॥४३२॥**

धेरैलाई लत्याएर एउटाका पछि नलाग्नू ।

**गतानुगतिको लोको न लोकः पारमार्थिकः ॥**

अन्धानुशरणले इहलोक र परलोकमा लाभ दिँदैन ।

**न दुर्जनेषु भागधेयः कर्तव्यः ॥४३३॥**

खराब आदत भएको मानिससँग मिलेर कुनै काम नगर्नू ।

**न कृतार्थेषु नीचेषु सम्बन्धः ॥४३४॥**

उन्नती गरेकै भएपनि नीचसँग सम्बन्ध कायम नगर्नू ।

**ऋणशत्रुव्याधिष्वशेषः कर्तव्यः ॥४३५॥**

ऋण, शत्रु र रोगको बीउ पनि काँकी नराख्नू ।

## भूत्यनुवर्तनं पुरुषास्य रसायनम् ॥४३६॥

समृद्ध जीवन दीर्घायु र स्वस्थता प्रदायक हुन्छ ।

## नार्थिष्ववज्ञा कार्या ॥४३७॥

आशेहरूको अपहेलना नगर्नू ।

## सुदुष्करं कर्म कारयित्वा कर्तामवमन्यते नीचः ॥४३८॥

नीच व्यक्ति कामदारलाई कठिन काममा जोताउँदै काम अपूरो भए दिक्कलाग्दो गरी अपमानित गर्ने गर्दछ ।

## नाकृतज्ञस्य नरकान्निवर्तनम् ॥४३९॥

अकृतज्ञ व्यक्ति नरकबाट कहिल्यै बाहिर निस्कन पाउँदैन ।

## जिह्वायत्तौ वृद्धिविनाशौ ॥४४०॥

प्रगति र विनाश जिब्रो (बोलीवचन) मा भर पर्दछ ।

## विषामृतयो राकरो जिह्वा ॥४४१॥

जिब्रो यस्तो भाँडो हो जसमा विष र अमृत दुबै भर्न सकिन्छ ।

## रोहते सायकैर्विद्धं वनं परशुना हतम् ।
## वाचा दुरुक्तया विद्धं न संरोहति वाक्क्षतम् ॥

वाणले लागेर बनेको घाउ भरिन्छ, बञ्चरोले फाँडेको बन पनि भरिन्छ तर गलत वचनले घोची बनाइएको घाउ कहिल्यै भरिन्न ।

## प्रियवादिनो न शत्रु : ॥४४२॥

मिठो वचन बोल्नेको कोही शत्रू हुँदैनन् ।

## स्तुता अपि देवतास्तुष्यन्ति ॥४४३॥

स्तुतिले त (अदृश्य) देवता पनि सन्तुष्ट भएर वरदान दिन्छन् ।

## अनृतमपि दुर्वचनं चिरं तिष्ठति ॥४४४॥

झूटो नै भएपनि दुर्वचन लामो समय (बिझि) रहन्छ ।

## राजद्विष्टं न च वक्तव्यम् ॥४४५॥

राजा (वा राजकर्मचारी) माथि अप्रिय आरोप नलगाउनू ।



## श्रुतिसुखात्कोकिलालापात्तुष्यन्ति ॥४४६॥

कान प्रिय कुरा मात्र सुन्न चाहन्छ, त्यसैले राजा वा राजकर्मचारी आदि कसैले गलत नै गरेपनि कोकिलको बोली सबैलाई प्रिय भए जसरी नै तिनलाई पनि प्रिय वचनकै प्रयोग गर्नू ।

## तप्यते दुष्करकारी यत्नवान् नाम ॥

कुकर्ममा मन लगाउने व्यक्तिले दुःखमा पिल्सिन्छ ।

## स्वधर्महेतुः सत्पुरुषः ॥४४७॥

आफ्नो धर्म पालना गर्नाले नै सत्पुरुष बन्न सकिन्छ ।

## नास्त्यर्थिनो गौरवम् ॥४४८॥

समाजमा माग्ने वा कञ्जुस धनीको सम्मानजनक स्थान हुँदैन ।

## स्त्रीणां भूषणं सौभाग्यम् ॥४४९॥

सौभाग्य स्त्रीको गहना हो ।

## शत्रोरपि न पतनीया वृत्तिः ॥४५०॥

शत्रू नै भएपनि मानिसको आजीविकाको साधन नष्ट गर्न हुँदैन ।

## अप्रयत्नादुदकं क्षेत्रम् ॥४५१॥

धेरै मेहनत नगरी जहाँ पानी उपलब्ध हुन्छ त्यही नै खेतीयोग्य जमिन हो ।

## एरण्डमवलम्ब्य कुञ्जरं न कोपयेत् ॥४५२॥

केही न केहीको अँडिरको लौरोले हात्तीलाई तर्साउन नखोज्नू ।अर्थात् क्षुद्र व्यक्तिको आड लिएर बलियोसँग निहुँ नखोज्नू ।

## अतिप्रवृद्धा शाल्मली वारणस्तम्भो न भवति ॥४५३॥

जतिसुकै ठूलो र बूढो रूख भएपनि सिमलको काठको किला भएपनि त्यसमा हात्ती बाँध्न मिल्नैन । सिमलको काठ बलियो हुँदैन । कसैको साथ खोज्दा उसको भित्री गुदी हेर्नू बाहिरी फुर्ती होइन । सिमलको रूखको आयु साठी हजार वर्ष सम्मको हुन्छ भनिएको छ ।

## अतिदीर्घोऽपि कर्णिकारो न मुसली ॥४५४॥

काठे चाँप जतिसुकै लामो र मोटो भएपनि त्यसको मुसल बनाउन मिल्दैन । (जतिसुकै समृद्ध भएपनि मुटु कमजोर हुने मान्छेबाट आँटिला काम लिन सकिन्न) ।

## अतिदीप्तोऽपि खद्योतो न पावकः ॥४५५॥

जतिसुकै चम्किलो जुनकिरी भएपनि त्यसले आगोको काम दिन सक्दैन । (मन कमजोर हुनेसँग बलका काम लिन सकिन्न ।)

## न प्रवृद्धत्वं गुणहेतुः ॥४५६॥

कोही कुनै कुरामा समृद्ध हुँदैमा त्यही समृद्धि नै उसको गुणको प्रमाण हुँदैन । (राजा होस् वा जोगी कसैको कुनै पनि किसिमको समृद्धिलाई विश्वासको आधार नबनाउनू ।)

## सुजिर्णोऽपि पिचुमन्दो न शङ्कुलायते ॥४५७॥

जतिसुकै छिप्पिएको भएपनि नीमको काठको किला बनाइँदैन । (दुष्ट स्वभावका मान्छे कुकुरको पुच्छर जस्तै नसोझिने खालका हुन्छन् ती जतिसुकै पाको भएपनि आफ्ना पुरानो दुर्गुण (वा कुलत) छाड्दैनन्) ।



## यथा बीजं तथा निष्पत्तिः ॥४५८॥

जस्तो बीउ रोप्यो त्यस्तै फल फल्दछ । (बाउआमा जस्ता हुन्छन् सन्तान त्यस्तै हुन्छन्) ।

## यथा श्रुतं तथा बुद्धिः ॥४५९॥

जसलाई जस्तो शिक्षा दिइन्छ, त्यसको बुद्धि त्यस्तै हुन्छ ।

व्याख्या: गलत खालका इतिहास, राजनीति वा व्यवहार सिकाइएको व्यक्तिबाट भविष्यमा राम्रो व्यवहारको आश नगर्दा हुन्छ । विगत लामो समयदेखि नेपालीलाई यो वा त्यो निहुँमा "आफूमा गुण विकसित कसरी विकसित गर्ने ?" भन्दा पनि "अर्काको दोष खोतलेर विरोध कसरी गर्ने ?" भन्ने शिक्षा दिइयो । यसैको परिणाम वर्तमान समयमा यो देशले भोगिरहेको छ ।

अकर्मण्य र प्रशंसाप्रिय समाज छ त्यसैले जतासुकै डाह र छटपटी मात्र देखिने गर्दछ । समय, अवसर र श्रोत कम छ तर उपभोग गर्न बाँकी कुरा दिमागमा अटेसमटेस भएर खाँदिएका छन्, त्यसैले यत्रतत्र अनियमितता र अशान्ति छ । परिवर्तनहरू गलत परम्परालाई सुधार्न वा सुध्रन नभई "आफूले पनि गलत काम गर्ने अवसर प्राप्त गर्नु" का रूपमा लिइने गरिए । घरमा आफैँले खाएको चियाको गिलास पखाल्न अल्छी गर्दछ तर भतुवा लागेका स्थानमा सबैको जुठो भाँडा माझ्न पाउँदा उ गर्व गर्दछ । देशभित्र काम गर्न "इज्जत" गएको ठान्दछ तर देशबाहिर शौचालय सफा गर्न पाउँदा पनि घिरौँला जत्रो नाक बनाउँदछ । यसैलाई भनिन्छ "यथा श्रुतं तथा बुद्धिः" ।

## यथाकुलं तथाऽऽचारः ॥४६०॥

कुल (परम्परा) जस्तो छ आचारविचार पनि त्यस्तै हुन्छ ।

## संस्कृतः पिचुमन्दो न सहकारो भवति ॥४६१॥



संस्कार गर्दैमा अर्थात् अमृत आदि लगेर फेदमा हाल्दैमा नीमको बोटमा गुलियो आँप फल्दैन ।

व्याख्याः जन्मदै दुष्ट गुण प्रधान भएको व्यक्ति कुनै पनि शिक्षा, सङ्गत आदिले सुध्रँदैन । यस्ता व्यक्तिका लागि शिक्षा, सङ्गत आदि अनुहारमा दलिने पाउडर जस्ता मात्र हुन्छन् । अवसर पाउनासाथ उसबाट मूल गुण नै बाहिर निस्कने गर्दछ । मानिस आफ्नो कुलपरम्पराले पन्ध्र वर्षसम्म सिकाएकोभन्दा बढी कुरा सामान्यतः सिक्न सक्दैन । कुलपरम्पराले के सिकेको छ र के सिकाउँदछ त ? त्यो कुरा महत्वपूर्ण हुन्छ । मानिसहरू "कुल खानदान हेर्ने" कार्यलाई भौतिक समृद्धि हेर्ने कुरासँग मात्र लगेर तुलना गर्दछन्, परम्परा नै यही बसाइएको छ । तर शास्त्रमा भने कुल खानदानको परिभाषा गहन तरिकाले यसरी दिइएको छ :"भौतिक समृद्धिको पुस्तैनी हालत, त्यो समृद्धिको उपभोग गर्ने पुस्तैनी तरिका, परम्परागत आचार विचार, धार्मिक भाव र सत्प्रयाशजन्य आयको व्यवस्थापन गर्ने तरिकालाई समेत कुल खानदान हेर्दा सँगसँगै हेरिनु पर्दछ ।"

## आय र व्यय अनि सुख

### न चागतं सुखं परित्यजेत्॥४६२॥

भेटिएको कम सुखलाई नभेटिएको बढी सुखको आशमा नछोड्नू ।

### स्वयमेव दुःखमधिगच्छति॥४६३॥

व्यक्ति स्वयं नै आफ्नो दुःखको कारण हुन्छ । (अर्काले मलाई दुःख दियो भन्नु मूर्खता मात्र हो) ।

### स्वयमेव दुःखमधिगच्छति राजचर्यात्॥

मानिस राजाको जस्तो जीवनशैली अपनाई आफैं दुःखमा फस्दछ ।



### एतदेवात्र पाण्डित्यं यदादल्पतरो व्ययः॥

आयभन्दा व्यय कम गर्नु नै परम बुद्धिमानी हुन्छ ।

व्याख्या: गलत कुरामा एक रुपैयाँ पनि करोडौं जसरी जोगाउने र आवश्यक वा सही कुरामा करोडौं पनि खुल्ला मनले खर्च गर्नेका घरबाट लक्ष्मी कहिल्यै अन्त जाँदिनन् । मानिसहरू फलानो व्यक्तिले वा फलानो नाताले वा फलानो व्यवस्थाले वा फलानो वादले दुखः दियो भन्दछन् । यो भ्रम हो । वास्तवमा आफ्नो मानसिक, शारीरिक र आर्थिक क्षमताभन्दा बढी उपभोग गर्ने चाहनाले नै मानिस दुःखी हुने गर्दछ । क्षमता नपुगेका चाहनाहरूले शङ्का र इर्ष्यालाई जन्माउँदछ । इर्ष्या जन्मिएपछि कि उ गलत काम गर्न थाल्दछ कि देखावटी वा नक्कली समृद्धिमा रमाउन थाल्दछ । यो पतनको बाटो हो । यसैले सुख र शान्ति चाहने मानिसले आय र व्ययमा सन्तुलन र सामञ्जस्य हुने हदसम्म मात्र चाहना गर्नू किन कि चाहनाको सीमा छैन,

"ला तँलाई पूरै पृथ्वी, गरी खा" भनेर दियो भनेपनि उ "अर्को ग्रह पनि पाए हुन्थ्यो" भन्ने चाहना राख्दछ ।

## न रात्रिचरणं कुर्यात् ॥४६४॥

रातमा घुम्ने काम नगर्नू ।

## न चार्धरात्रं स्वप्यात् ॥४६५॥

रातमा सुत्दा आधारात बनाएर अर्थात् ढिलो नसुत्नू ।

## तद्विद्वद्भिः परीक्षेत ॥४६६॥

कतिखेर खाने, कतिखेर सुत्ने, कतिखेर उठ्ने, कहाँ जाने, कहाँ नजाने आदि कुरा स्वस्थ एवं दीर्घजीवि कुलका वृद्ध, सभ्रान्तवर्ग र विद्वानहरूसँग सिक्नू ।



व्याख्या: "जो अगुवा उही बाटो हगुवा" नेपालीमा यो उखान प्रचलित छ । मूल नै खराब भएपछि बाल्टिन सफा गर्दैमा पानी सफा हुँदैन । नीतिशास्त्रमा विद्या, अर्थतन्त्र, समाजसेवा, राजनीति, परिवार, कुल आदि जुनसुकै क्षेत्रका अगुवा व्यक्तिहरुले आफ्ना हरेक दिनचर्यालाई सावधानीपूर्वक चलाउनू भनेका छन् । ती भन्दछन्-उसका पछि लाग्नेहरू जानेर वा नजानेर स्वतः उसको अनुशरण गरिरहेका हुन्छन् । चाणक्यको यो सूत्रमा "विद्वान्" शब्दले पढेर वा परेर गल्ती नगर्ने अभ्यस्त भएको पाको मानिसलाई बुझाउँदछ । यस्ता व्यवहारिक कुरा सबैले पढेका हुँदैनन् । परेर पछुताउने समय पनि भइसकेको हुँदैन । त्यसैले तिनलाई पढेका वा परेर पछुताइ सकेका पाकाको अनुशरण गर्नू भनिएको हो ।

## परगृहमकारणतो न प्रविशेत् ॥४६७॥

अर्काको घरमा बिना काम नछिर्नू ।

## ज्ञात्वापि दोषमेव करोति लोकः ॥४६८॥

यो गलत हो भनी जान्दाजान्दै पनि मानिस अर्काको धन आदि आँखा छलेर लिने स्वभावको हुन्छ ।

## शास्त्रप्रधाना लोक(प्र)वृत्तिः ॥४६९॥

समाजमा चलेका प्रचलन (लोकाचार) जति सबै शास्त्रका आधारमा नै चलेका हुन्छन् ।

## शास्त्राभावे शिष्टाचारमनुगच्छेत् ॥४७०॥

शास्त्रको ज्ञान नहुँदा वा कुनै कुरा शास्त्रमा नपाउँदा शिष्ट व्यक्तिको आचरणलाई अनुशरण गर्नू ।

**न पाणिपादचपलो न नेत्रचपलो मुनिः ।**
**न च वाग्भङ्गचपलो इति शिष्टस्य लक्षणम् ॥**

न गोडामा न त हातमा नै चञ्चलता हुन्छ । न आँखामा न वचनमा नै चञ्चलता हुन्छ । शिष्ट व्यक्तिका यिनै लक्षण हुन् ।

## नाचरिताच्छास्त्रं गरीयः ॥४७१॥

शास्त्र शिष्टाचारभन्दा महत्वपूर्ण हुँदैन । (किन कि शिष्टाचार जीवित शास्त्र हो) ।

## दूरस्थमपि चारचक्षुः पश्यति राजा ॥४७२॥

दूतका आँखा मार्फत राजाले टाढाटाढाका कुरा पनि देख्न सक्दछ ।

**गावो गन्धेन पश्यन्ति वेदैः पश्यन्ति ब्राह्मणः ।**
**चारैः पश्यन्ति राजानश्चक्षुर्भ्यामितरे जनाः ॥**

गाई गन्धले हेर्दछ (गन्ध सुँघेर खान हुने नहुने कुरा थाहा पाउँदछ) । ब्राह्मण वेदले हेर्दछ (वेद-ज्ञान मार्फत कर्तव्य र अकर्तव्य थाहा पाउँदछ) । राजा गुप्तचरका आँखाले हेर्दछ ( गुप्तचर मार्फत देश-विदेशका महत्वपूर्ण जानकारी प्राप्त गर्दछ) । सामान्य मानिस आँखाले हेर्दछ (आँखाले जे देख्यो त्यही कुरा सही ठान्दछ) ।

## गतानुगतिको लोकः ॥४७३॥

सामान्य नागरिकको स्वभाव भेडाको जस्तो हुन्छ ।

व्याख्याः बुद्धिमान व्यक्ति देखेका, सुनेका र पढेका कुरालाई पहिले आफ्नो विवेक भएका ठाउँमा लैजान्छ र मन्थन गरेर उचित लागे मात्र त्यसलाई व्यवहारमा उतार्दछ । तर सामान्य नागरिक देखेका, सुनेका र पढेका भरमा त्यसलाई तुरुन्त कार्यान्वयन गर्नेतिर लाग्दछ ।

## यमनुजीवेत्तं नापवदेत् ॥४७४॥



मानिसले आफू जसको आडभरोसामा बाँचेको हुन्छ त्यसको निन्दा नगर्नू ।

**यदीच्छसि वशीकर्त्तुं जगदेकेन कर्मणा ।**
**परापवादसस्येभ्यो गां चरन्तीं निवारय ॥**

यदि तिमी एउटै काम गरेर विश्वलाई नियन्त्रण गर्न चाहन्छौ भने आफ्नो गाईरूपी जिभ्रोलाई अर्काको निन्दारूपी घाँस चर्न नदेऊ ।

## तपःसार इन्द्रियनिग्रहः ॥४७५॥

इन्द्रियलाई वशमा पार्नु नै तपस्याको सार हो ।

## दुर्लभः स्त्रीबन्धनान्मोक्षः ॥४७६॥

स्त्री-बन्धन (माया एवं भोग) बाट मुक्त हुन कठिन हुन्छ ।

**स्त्रीनाम सर्वाशुभानां क्षेत्रम् ।।४७७।।**

स्त्री सबै खाले अशुभ कुराको मैदान हुन् ।

**न च स्त्रीणां पुरुषपरीक्षा ।।४७८।।**

स्त्रीहरुले पनि पुरुषको परीक्षा गर्दैनन् ।

**स्त्रीणां मनः क्षणिकम् ।।४७९।।**

स्त्रीहरूको मन एकछिन पनि स्थिर हुँदैन, चञ्चल हुन्छ ।

**अशुभद्वेषिणः स्त्रीषु न प्रसक्ताः (प्रसक्तिः) ।।४८०।।**

अशुभ कुराप्रति द्वेष राख्ने व्यक्तिले स्त्रीप्रति बढी आशक्त नहुनू ।



**अशुभवेशाः स्त्रीषु न प्रशस्ताः ।**

अशुभ खालका भद्दा पहिरन स्त्रीका लागि योग्य हुँदैन ।

**यज्ञफलज्ञास्त्रिवेदविदः ।।४८१।।**

परमेश्वर र आत्मस्वरूपलाई पहिचान गर्नेलाई नै तीन वेदको ज्ञाता भनिन्छ ।

**स्वर्गस्थानं न शाश्वतम् (यावत्पुण्यफलम्) ।।४८२।।**

कर्म गरी आर्जन गरिने शारीरिक वा स्वर्गीय (भोग) सुख धेरै दिन टिक्दैन (यस्तो सुख पुण्यकर्मको फल नसकिँदा सम्मका लागि मात्र हुन्छ । यसैले मानसिक सुख खोज्नू) ।

**न च स्वर्गपतनात् परं दुःखम् ।।४८३।।**

भोगिरहेको शारीरिक वा स्वर्गीय सुखबाट वञ्चित हुनुजस्तो ठूलो दुःख अरु कुनै हुँदैन ।

व्याख्या : दुःख भूत जस्तै हुन्छ । जति डरायो त्यति दुःखले सताइरहन्छ । त्यसैले दुःखसँग जुध्न सिक्नू । शरीरसँग जति धेरै सुख र दुःखको भोगाईको असरले हुने दूरी कम हुन्छ उती नै मानव सुखी हुन्छ ।

## देही देहं त्यक्त्वा ऐन्द्रपदं न वाञ्छति ॥४८४॥

शरीरधारी जीव शरीर त्यागेर इन्द्र हुन चाहँदैन ।

व्याख्या: सक्षम हुँदा त सुख खोज्दछ नै इन्द्रियले काम गर्न छाडेपछि पनि मानिस इन्द्रिय-सुखकै बारेमा सोचिरहने गर्दछ । इन्द्रियले सक्षम हुँदा भोगेका रमाइला पलहरू सम्झी सम्झी रोमाञ्चित हुँदै पुनः त्यस्तै पलहरू भोग्न पाए हुन्थ्यो भनेर प्राण नजाँदासम्म आश गरिरहन्छ । इन्द्रिय-सुखको सन्तुष्टीको कुनै बिन्दु नै हुँदैन । जसरी अन्नपानीले दिने सन्तुष्टी क्षणिक हुन्छ, त्यसरी नै इन्द्रियजन्य सुख पनि क्षणिक हुन्छ । आज तीनतारे होटलको रौनकले आनन्द मानिरहेको इन्द्रिय-नियन्त्रित मन भोलीका लागि चारतारे होटलको स्वप्निल कल्पनामा हराउने गर्दछ । अर्थात् जीव नदेखिने कुरा पाउनका लागि देखिने कुराको उपभोग गर्न सहजै छाड्दैन । त्यसैले यस लोकको र मृत्युपछिको सुखमा विश्वास गर्ने हरेक मानवले सुख र दुःखको भोगाइको भिन्नता कम गर्दै जीवन जिउन सिकून् । सुख र दुःखको कम अन्तरालमा बाँच्न अभ्यस्त व्यक्तिलाई मोक्षको बाटो खोज्न सजिलो हुन्छ ।



## दुःखानामौषधं निर्वाणम् ॥४८५॥

दुःखको औषधी भनेको मोक्ष हो ।

व्याख्या: बन्धन सबै खालका दुःखको जड हो । सांसारिक बन्धनमा भनभन जेलिएर सुख खोज्नु मृगतृष्णा मात्र हो ।

## अनार्यसम्बन्धादूरमार्यशत्रुता ॥४८६॥

अनार्यसँगको घनिष्टता भन्दा आर्यसँगको शत्रुता श्रेष्ठ हुन्छ ।

व्याख्याः आर्य र अनार्यको परिभाषा आजकल जातिमा लगेर व्याख्या गरिन्छ । तर शास्त्रको मर्म फरक छ । शास्त्रले बताएका सदाचार पालना गर्ने जुनसुकै जातको र जहाँसुकै जन्मेको व्यक्ति पनि आर्य हुन्छ । यसैगरी यस्तो आचरण नगर्ने व्यक्ति जुनसुकै जातको र जहाँसुकै जन्मिएको भएपनि अनार्य हुन्छ । जहाँ कुनै बेला आर्यहरू बस्दथे त्यहाँ अनार्यशैलीको समाज विकसित भइरहेको छ । अनि जहाँ अनार्यहरू बस्तछन् त्यहाँ अनेक निहुँमा आर्यहरुलाई लगेर राख्न थालिएको छ । व्यक्ति ओसारिएको होइन संस्कार र संस्कृतिलाई ओसारिएको हो । नत्र ओसार्नलाई विश्वभर अनेक देशमा अनेक थरी मानिस थिए, खाँचो थिएन, किन यही क्षेत्रलाई प्राथमिकता दिइन्छ ?



## निहन्ति दुर्वचनं कुलम् ॥४८७॥

तुच्छ वचन बोल्नाले कुलको इज्जत नष्ट हुन्छ ।

## न पुत्रसंस्पर्शात् परं सुखम् ॥४८८॥

पुत्र लाभ हुनुलाई सांसारिक सुखमध्येको सबभन्दा उत्तम सुख मान्ने गरिन्छ ।

## विवादे धर्ममनुस्मरेत् ॥४८९॥

झगडा हुँदा पनि धर्मलाई सम्झने गर्नू, नछाड्नू ।

## निशान्ते कार्यं चिन्तयेत् ॥४९०॥

रातको अन्तमा अर्थात् बिहानको ब्रह्ममुहूर्तमा उठेपछि त्यो दिन गर्ने सबै कामकुराका बारेमा योजना बनाउनू वा चिन्तन गर्नू । यो सूत्रको अर्को अर्थ "व्यवधानरहीत स्थानमा बसी छलफल गर्नू" भन्ने पनि हुन्छ ।

### प्रदोषे न संयोगः कर्तव्यः ॥४९१॥

दोषयुक्त स्थलमा छलफल नगर्नू ।

### उपस्थितविनाशो दुर्नयं मन्यते ॥४९२॥

नासिने मेलो भएपछि मानिस नीति विपरीतका कामकुरा गर्न थाल्दछ ।

### क्षीरार्थिनः किं करिण्या ॥४९३॥

दूध चाहनेले ढोइ लिएर के गर्नू ?



### न दानसमं वश्यम् ॥४९४॥

अरुलाई वशमा पार्नका लागि दानभन्दा ठूलो कुरो अरु छैन ।

### परायत्तेषूत्कण्ठां न कुर्यात् ॥४९५॥

अरुको हातमा गएको आफ्नो वस्तु पाउन उत्ताउलो नहुनू ।

### असत्समृद्धिरसद्भिरेव भुज्यते ॥४९६॥

गलत तरिकाबाट पाइने समृद्धिको उपभोग पनि गलत तरिकाबाट नै हुन्छ ।

व्याख्या: बाउबाजेले गलत तरिकाले आर्जन गरेको धन छोरानातीले देखावटी आडम्बरमा अथवा कुलतमा फसेर उडाउँदै सक्दछन् । इमान्दारिताको कमाईले जोडिएका श्रीसम्पत्तिप्रति परिवारको हरेक सदस्यलाई माया हुन्छ

। यसलाई नाश गर्न वा बेच्न पर्दा पनि ती धेरै पटक सोच्दछन् । तर बेइमानीले जोडिएको सम्पत्तिमा भित्री माया हुँदैन । जसरी आएका थिए ती त्यसरी नै जान्छन् । सारमा भन्नुपर्दा आर्जनको श्रोत शुद्ध नहुने खालको समृद्धिबाट परिवार, समाज र देशले कहिल्यै राम्रो कुरा सिक्न सक्दैन, पाउँदैन । समाजलाई दीर्घकालसम्म स्वस्थ, स्वच्छ र शान्त बनाउन चाहने हो भने उसले गर्ने समृद्धिलाई पनि  कडाइका साथ स्वस्थ बनाउनु पर्दछ ।

## निम्बफलं काकैर्भुज्यते ॥४९७॥

नीमको फल कागबाट नै खाइने गर्दछ । (सामान्यतः आर्जन-प्रक्रिया गलत छ भने खर्च-प्रक्रिया पनि गलत नै हुन्छ ।)

## नाम्भोधिस्तृष्णामपोहति ॥४९८॥

समुद्रको पानी तिर्खा मेटाउन काम लाग्दैन ।



व्याख्या : जतिसुकै धनी भएपनि धनी हुन अपनाइएको बाटो गलत छ भने त्यो धनले कमाउन खोजिने यश क्षणिक हुन्छ र गरिने धर्मकर्म व्यर्थ हुन्छन् ।

## बालुका अपि स्वगुणमाश्रयन्ते ॥४९९॥

बालुवा पनि आफ्नो रुखो र कडा स्वभावलाई कहिल्यै छाड्दैन ।

व्याख्या: मानिसको स्वभाव दुई किसिमको हुन्छ । जन्मजात र संस्कारजन्य । जन्मनासाथ जङ्गलमा लगेर छाडिदिने हो भने उ पनि पशुसमान हुन्छ । कलियुगको प्रथम चरणका लागि मानिसको अधिकतम आयु सय वर्ष तोकिएको छ । यो आयुको पहिलो एक चौथाइ आयुमा अर्थात् पच्चीस वर्षभित्रमा मानिसले जे सिक्दछ वा उसलाई जे सिकाइन्छ त्यही नै जीवनभर उसले प्रयोग गर्दछ । यही भएर सबै संस्कार यही उमेरभित्र गर्नुपर्ने नियम बनाइएको हो । फाल्नुपर्ने कुरा जति फालेर काम लाग्ने कुरा

मात्र ग्रहण गर्नु भनेकै संस्कार गर्नु हो । धानचामलको पनि संस्कार हुन्छ । संस्कार औपचारिकता होइन, तर अहिले संस्कारलाई औपचारिकतामा सीमित बनाउन थालिएको छ ।

**सन्तोऽसत्सु न रमन्ते ॥५००॥**

सज्जन व्यक्ति गलत आचारविचार भएका मानिससँग रमाउँदैन ।

**न हंसा प्रेतवने रमन्ते ॥५०१॥**

हाँसहरु मसानमा बस्न चाहँदैनन् ।

**न विना परवादेन रमते दुर्जनो जनः ।**
**काकः सर्वरसान् भुक्त्वा विनाऽमेध्यं न तृप्यति ॥**

अर्काको कुरा नकाटी वा अरुलाई गाली नगरी दुर्जनलाई कहिल्यै खाएको पच्दैन । कागले गुलियो, तीतो आदि छ रसले युक्त भएका चौरासी व्यञ्जन खान पाए पनि उडेर गई कुनै दिसा आदिजस्ता अपवित्र कुरा नखाई अघाउँदैन ।

**अर्थार्थं प्रवर्तते लोकः ॥५०२॥**

सारा संसारका मानिस बिउँझिएपछि धनकै लागि सलबलाउने गर्दछन् ।

व्याख्याः तर यो गलत हो । अर्थ चाहिन्छ तर अर्थमा अन्धो हुनु हुँदैन । अर्थान्ध मानिस अन्तिममा गएर बिच्छी जस्तो हुन पुग्दछ । बिच्छीले आफूलाई जन्माउने आमालाई नै लुछी लुछी खाने गर्दछ ।

**आशया बध्यते लोकः ॥५०३॥**

सामान्य मानिस आशैआशमा धैर्य गुमाई बाँचिरहने गर्दछ ।

## न चाशापरैः श्रीः सह तिष्ठति ॥५०४॥

आशे मानिस सधैं श्रीहीन हुन्छ ।

व्याख्याः नष्ट हुने कुराहरूको आशका भरमा बाँच्ने मानिस आफैंले आफैंलाई धिक्कारिरहने स्वभावको हुन्छ । आत्मनिन्दा गर्ने मानिससँग लक्ष्मी बस्न रुचाउँदिनन् ।

## आशापरे न धैर्यम् ॥५०५॥

अत्यधिक आश गर्ने वा महत्वाकाङ्क्षी मानिसमा धैर्यता हुँदैन । (मानिसले आफ्नो क्षमता, मर्यादा र कर्म अनुरुपको आश गर्नू ।

## आशायाः खलु ये दासाः दासास्ते सर्वलोकस्य ।
## येषामाशा दासी तेषां दासायते लोकः ॥



जो आशाको दास हुन्छ उ संसारकै दास हुन्छ । जसले आशालाई दासी बनाएको हुन्छ संसार नै उसको दास हुन्छ ।

## अश्नुते विक्षिपति जनमिति आशा ॥

जे कुराले सारा शरीरमा फैलिएर मानिसलाई विक्षिप्त (पागल सरह) बनाउँदछ त्यसलाई आशा भनिन्छ ।

## दैन्यान्मरणमुत्तमम् ॥५०६॥

दीन हुनुभन्दा त मर्नु वेश हुन्छ ।

व्याख्याः आफूलाई हेय सम्भनेले जीवनमा केही पनि प्रगति गर्न सक्दैन । त्यसैले सधैं उत्साहित रहने गर्नू ।

**आशा लज्जां व्यपोहति ।।५०७।।**

आशाले मानिसको लज्जालाई मार्दछ ।

**न मात्रा सह वासः कर्तव्यः ।।५०८।।**

एकान्तमा आमासँग पनि लामो समय नबस्नू ।

**आत्मा न स्तोतव्यः ।।५०९।।**

आफ्नो प्रशंसा आफैँले नगर्नू ।

**न दिवा स्वप्नं कुर्यात् ।।५१०।।**

दिउस नसुत्नू ।



**आयुः क्षयी दिवा निद्रा ।।**

दिउस सुत्नाले आयु घट्दछ ।

**न चासन्नमपि पश्यत्यैश्वर्यान्धः न शृणोतीष्टं वाक्यम् ।।५११।।**

धनले उन्मत्त भएको व्यक्तिले नजिकैका असल व्यक्तिलाई उपेक्षा गर्दछ र तिनले दिएका राम्रा उपदेशलाई पनि एक कानले सुनी अर्को कानले उडाउने गर्दछ ।

**स्त्रीणां न भर्तुः परं दैवतम् ।।५१२।।**

आर्यनारीका लागि पतिसमान पूजनीय अरु कोही हुँदैन ।

**तदनुवर्तनमुभयसौख्यम् ।।५१३।।**

पतिका सबै धर्मकर्ममा साथ दिने पत्नी हुँदा दुवैले सुख पाउँदछन् ।

**अतिथिमभ्यागतं पूजयेद्यथाविधि ॥५१४॥**

घरमा अतिथि वा पाउना आउँदा यथायोग्य सत्कार गर्नू ।

**नित्यं संविभागी स्यात् ॥**

आफ्नो आर्जन अधिकार प्राप्त सबैमा यथोचित भाग लगाई बाँड्ने गर्नू ।

**नास्ति हव्यस्य व्याघातः ॥५१५॥**

सत्पात्रलाई दिइएको दान खेर जाँदैन ।



**शत्रुरपि प्रमादी लोभात् ॥**

शत्रुपनि लोभले गर्दा असावधान हुन पुग्दछ ।

व्याख्या: शत्रुलाई वशमा पार्ने अनेकौं उपायहरूमध्ये उसलाई लोभमा फसाउनु पनि एक उपाय हो किन कि लोभ मानिसको सबभन्दा कडा मर्मस्थल हो ।

**शत्रुर्मित्रवत् प्रतिभाति ॥५१६॥**

बुद्धिभ्रष्ट भएपछि शत्रु पनि मित्र जस्तै देखिन थाल्दछ ।

**मृगतृष्णा जलवद् भाति ॥५१७॥**

मृगतृष्णा जल चम्केझैं चम्कने गर्दछ ।

## उपालम्भो नास्त्यप्रणयेषु ॥

कठोर र श्रद्धारहित व्यक्तिलाई गालि मात्र गर्नुको कुनै तूक हुँदैन ।

## दुर्मेधसां असच्छास्त्रं मोहयति ॥५१८॥

कम बुद्धि भएका मानिसलाई झुटो शास्त्र (वा धर्म वा विचार) ले लोभ्याउने गर्दछ ।

व्याख्या: कम बुद्धि भएका मानिसमा अन्धभक्तता बढी हुन्छ । पहिले आँखा चिम्लेर समर्थन गर्दछन् र पछि पछुताउँदछन् । धार्मिक, राजनैतिक आदि सबै क्षेत्रमा यो नियम लागू हुन्छ । लेण्डूप दोर्जेमाथि अन्धभक्ति नगरिएको भए काश्मिरको अस्तित्व सकिँदैनथ्यो । आशारामप्रति अन्ध समर्थन नगरिएको भए उनी समातिँदा उनका अनुयायीहरूलाई पीडा हुँदैनथ्यो । विश्वास गर्नू किन कि संसारमा असम्भव भन्ने कुरा केही पनि हुँदैन, तर अन्धविश्वास नगर्नू ।



## सत्सङ्गः स्वर्गवासः ॥५१९॥

असल मानिस (सन्त) को सङ्गत गर्नु भनेकै स्वर्गमा बस्नु हो ।

## आर्यः स्वमिव परं मन्यते ॥५२०॥

आर्यहरू अरुबाट जेजस्तो व्यवहारको आश गर्दछन् ती अरुलाई पनि त्यस्तै व्यवहार गर्दछन् ।

## रूपानुवर्ती गुणः ॥५२१॥

(सामान्यतः) मानिसको रूप (एवं लवाईखवाई) जस्तो हुन्छ उसका गुण पनि त्यस्तै खालका हुन्छन् ।

## यत्र सुखेन वर्तते तदेव स्थानम् ॥५२२॥

सुख (र शान्ति) पूर्वक जहाँ बस्न पाइन्छ त्यही नै बस्नयोग्य स्थान हो ।

**विश्वासघातिनो न निष्कृतिः ॥५२३॥**

विश्वासघात गर्ने व्यक्तिको उद्धार गर्ने (पापबाट मुक्त गराउने) कुनै उपाय छैन ।

**दैवायत्तं न शोचेत् ॥५२४॥**

आफ्नो वशमा नहुने खालका प्राकृतिक विपदा आदि पर्दा चिन्तामा रुमलिने नगर्नू ।

**आश्रितदुःखमात्मन इव मन्यते साधुः ॥५२५॥**

साधु वा सज्जनहरू आफ्ना आश्रितजन वा समर्थकलाई दुःख पर्दा आफैँलाई दुःख परे जसरी हटाउन लागि पर्दछन् ।



**हृद्गतमाच्छाद्यान्यद्वदत्यनार्यः ॥५२६॥**

अनार्य (वा दुष्ट) हरू मनको कपटलाई मिठा कुरा गरेर लुकाउने गर्दछन् ।

**मनस्यन्यद्वचस्यन्यत्कर्मण्यन्यद् दुरात्मनाम् ।**
**मनस्येकं वचस्येकं कर्मण्येकं महात्मनाम् ॥**

दुर्जनहरू मनले एक थोक सोच्दछन्, मुखले अर्कै कुरा गर्दछन् र काम अर्कै गर्दछन् । सज्जनहरू मन, वचन र कर्मले एउटै कामकुरा गर्दछन् ।

**बुद्धिहीनः पिशाचादनन्यः ॥५२७॥**

असल बुद्धि नहुने व्यक्ति घृणाको पात्र हुन पुग्दछ ।

## असहायः पथि न गच्छेत् ॥५२८॥

आत्मरक्षाका कुरा साथमा नलिई वा नसोची कतैपनि (लामो) यात्रामा नजानू ।

## पुत्रो न स्तोतव्यः ॥५२९॥

गुणवान् सन्तानको प्रशंसा गर्नु र खराब सन्तानको निन्दा गर्नु आमाबाबुको धर्म हो । तर यी दुवै कुरा अरुका अगाडि नगर्नू सन्तानका अगाडि मात्र गर्नू ।

## स्वामी स्तोतव्योऽनुजीविभिः ॥५३०॥

आफ्ना गुनिला स्वामीलाई लोकप्रिय बनाउन अरुहरूका अगाडि उनका गुणको प्रशंसा गर्ने गर्नू ।

## धर्मकृत्येष्वपि स्वामिन एव घोषयेत् ॥५३१॥



अरुको आश्रयमा बस्ने व्यक्तिहरूले कुनै धर्मकर्म गर्दा त्यो आफ्नै मालिकले गरेको हो भन्ने गरुन् ।

## राजाज्ञां नातिलङ्घयेत् ॥५३२॥

राजाको आदेश पालना गर्न आनाकानी नगर्नू ।

## स्वाम्यनुग्रहो धर्मकृत्यं भृत्यानाम् ॥

मालिकलाई सेवाले सन्तुष्ट पार्दै केही पाउन सक्नु नै सेवक-धर्म हो ।

## यथाऽऽज्ञप्तं तथा कुर्यात् ॥५३३॥

राजा (वा राज्यप्रमुख) बाट जेजस्तो आदेश हुन्छ त्यसको पालना गर्नू ।

सविशेषं वा कुर्यात्॥

तुरुन्त नगरी नहुने काम भए आज्ञा नलिइकनै पनि गर्नू ।

स्वामिनो भीरुः क्वोपयुज्यते॥

सेवाकार्यमा डरछेरुवा व्यक्तिको कुनै काम छैन ।

नास्त्यनार्यस्य सेवा॥

अनार्य व्यक्ति सेवा गर्न वा दया देखाउन जान्दैन ।

नास्ति बुद्धिमतां शत्रुः ॥५३४॥

बुद्धिमान व्यक्तिका कोही शत्रु हुँदैनन् ।



शत्रुं न निन्देत् सभायाम्॥

सार्वजनिक स्थलमा वा सभामा शत्रुको (पनि) निन्दा नगर्नू ।

आत्मच्छिद्रं न प्रकाशयेत्॥५३५॥

शत्रुलाई आफ्ना कमीकमजोरीहरू थाहा नदिनू ।

शक्तौ क्षमा श्लाघनीया॥

दण्ड दिन समर्थ हुँदा पनि क्षमा दिनु प्रशंसायोग्य बानी हो ।

क्षमावानेव सर्वं साधयति॥५३६॥

क्षमाशील व्यक्तिले नै आफ्ना सबै चाहना सफल बनाउन सक्दछ ।

**आपदर्थं धनं रक्षेत्॥५३७॥**

भविष्यमा पर्न सक्ने सङ्कटलाई टार्न धनलाई जोगाउने गर्नू । (सेभिङ्ग ह्याबिट बसाल्नू) ।

**साहसवतां प्रियं कर्तव्यम्॥५३८॥**

गलत कुराको विरोध गर्नेहरूको सहयोगी हुनू ।

**श्वः कार्यमद्य कुर्वीत॥५३९॥**

काम नसाँच्नू, अहिले तुरुन्तै गर्नू ।

**आदानस्य प्रदानस्य कर्तव्यस्य च कर्मणः ।
क्षिप्रमक्रियामाणस्य कालः पिबति तद्रसम्॥**

लिने, दिने र कर्तव्य कर्म सोच्नासाथ वा सम्झनासाथ तुरुन्त गर्नू नत्र समयले यिनको फललाई चुसि दिन्छ ।

**अपराह्णिकं पूर्वाह्ण एव कर्तव्यम्॥५४०॥**

भरे गर्ने काम बिहान नै गर्नू । काम नसाँच्नू किन कि कामको अन्त कहिल्यै हुँदैन एकपछि अर्को काम थपिँदै जान्छ ।

**व्यवहारानुलोमो धर्मः॥५४१॥**

धर्म व्यवहारको बाधक हुनु हुँदैन ।

व्याख्या: धर्म व्यवहारका लागि संशोधक, सुधारक, सहायक एवं मार्गदर्शक हुनुपर्दछ । धर्म व्यावहारिक जीवनको अभिन्न अङ्ग हुनुपर्दछ । व्यवहार अर्कोथरी र धर्म अर्कोथरी भयो भने समाज भ्रष्ट हुन्छ । जस्तै "सीमन्तोन्नयन संस्कार" जस्ता संस्कार छाडी "बेबी सावर" जस्ता संस्कृति अँगाल्नू । यस्ता संस्कारलाई खच्चड संस्कार भनिन्छ र कालान्तरमा घरको न घाटको भएर सिद्धिन्छ ।

यस सम्बन्धमा महाभारतले लेख्दछ-

**धारणाद्धर्म इत्याहुर्न लोकचरितं चरेत् ।**

असल कुराहरु व्यवहारमा उतार्नु नै धर्म हो । अरुले गरेका कुरा अन्धो भई अनुकरण गर्नु अधर्म हो, लोक चरित्रको अन्धाधुन्ध अनुकरण नगर्नू, नगराउनू ।

**सर्वज्ञता लोकज्ञता ॥५४२॥**



आफ्नो तिखो बुद्धिले लोकको चरित्र थाहा पाउन सक्नु भनेको नै ज्ञान हुनु हो ।

**शास्त्रज्ञोऽप्यलोकज्ञो मूर्खतुल्यः ॥५४३॥**

शास्त्रको ज्ञान भएर पनि यदि उसमा लोक-चरित्र सम्बन्धी ज्ञान छैन भने उ मूर्खसरह हुन्छ ।

**शास्त्रप्रयोजनं तत्वदर्शनम् ॥५४४॥**

लौकिक र अलौकिक कुराको सत्यतथ्य ज्ञान गराउनु नै शास्त्रको उद्देश्य हो ।

**तत्त्वज्ञानं कार्यमेव प्रकाशयति ॥५४५॥**

यथार्थ वा सत्य कुराको ज्ञानले गरिने कर्मलाई चम्काउने काम गर्दछ ।

## व्यवहारे पक्षपातो न कार्यः ॥५४६॥

व्यवहारमा सत्यको साथ दिनू र पक्षपात नगर्नू ।

## धर्मादपि व्यवहारो गरीयान् ॥५४७॥

धर्मभन्दा व्यवहार श्रेष्ठ हुन्छ ।

व्याख्याः व्यवहारमा प्रयोग गर्न नसकिने वा प्रयोग नगरिने कुरालाई धर्म भनिंदैन । व्यवहार नै धर्मको आधारस्थल हो । व्यवहारमा सत्यता छैन भने त्यो धर्म नै होइन ।

## आत्मा हि व्यवहारस्य साक्षी ॥५४८॥

व्यवहारको साक्षी आत्मा हुन्छ ।



व्याख्याः व्यवहार पढेर वा देखेर सिकिन्न आफैंले गर्नुपर्दछ । जसरी माछाका भुरालाई पौडन सिकाउनु पर्दैन त्यसरी नै मानिसलाई व्यवहारका सिकाउनु पर्दैन, स्वतः सिक्नु पर्दछ ।

## सर्वसाक्षीह्यात्मा ॥५४९॥

सबै कुराको साक्षी आत्मा हुन्छ ।

## न स्यात् कूटसाक्षी ॥५५०॥

गलत कुराको साक्षी नहुनू, नबस्नू ।

## कूटसाक्षिणे नरके पतन्ति ॥५५१॥

झूटो साक्षी बस्नेहरू नरकमा पर्दछन् ।

**न कश्चिन्नाशयति समुद्धरति वा ॥**

सत्य वा असत्यको साक्षी बसेर मानिसले अरु कसैको भलो वा कुभलो गरिरहेको हुँदैन आफ्नै भलो वा कुभलो गरिरहेको हुन्छ ।

**प्रच्छन्नपापानां साक्षिणो महाभूतानि ॥५५२॥**

कसैले देखेका छैनन् भनी लुकेर गरिने पापको प्रकृति साक्षी हुन्छ ।

व्याख्या: गोप्य तरिकाले गरिएका पापको दण्ड प्रकृतिले गोप्य तरिकाले नै दिने गर्दछ । यसैलाई भगवान्ले दण्ड दिएको भन्ने गरिन्छ । अर्को किसिमले भन्नुपर्दा लुकिछिपी भएका अपराधमा अन्य प्रमाण नपाइए प्राकृतिक प्रमाणको सहारा लिनु पर्दछ ।

**आत्मनः पापमात्मैव प्रकाशयति ॥५५३॥**

आफूले गरेका पाप पापीले कुनै दिन आफैं बताउँदै हिँड्दछ ।

व्याख्या: पापी कहिल्यै शान्त रहन सक्दैन । मानिस सधैं अशान्त हुन सक्दैन । यही भएर पाप पापीबाटै प्रकट हुने गर्दछ ।

**प्रच्छन्नं यत्कृतं तदपि न प्रच्छन्नमात्मनः ॥**

अरुबाट लुकाएर गरिएका कुरा पनि आत्माले देखिरहेको हुन्छ ।

**व्यवहारेऽन्तर्गतमाकारः सूचयति ॥५५४॥**

मनुष्यको आकृतिले मनका कुरालाई अरु समक्ष प्रकट गरिरहेको हुन्छ ।

**आकारसंवरणं देवानामशक्यम् ॥५५५॥**

आफ्ना मनका कुरालाई अनुहारमा देखिनबाट लुकाउन देवताले पनि सक्दैनन् ।

**चोरराजपुरुषेभ्यो वित्तं रक्षेत्॥५५६॥**

राजाहरूले चोर तथा राजकर्मचारीबाट जनताको धनलाई जोगाउनू ।

**दुर्दर्शना हि राजानः प्रजा नाशयन्ति॥५५७॥**

जनताका बारेमा केही नगर्ने, नसुन्ने र नहेर्ने राजाले जनतालाई नाश गर्दछ ।

**सुदर्शना हि राजानः प्रजा रञ्जयन्ति॥५५८॥**

जनताका बारेमा राम्रो गर्ने, सुन्ने र हेर्ने राजाले जनतालाई आनन्द प्रदान गर्दछ ।

**न्याययुक्तं राजानं मातरं मन्यन्ते प्रजाः॥५५९॥**

न्यायशील राजालाई प्रजाहरू आमासमान मान्ने गर्दछन् ।

**तादृशः स राजा इह सुखं ततः स्वर्गमाप्नोति॥५६०॥**

त्यसरी (न्यायशील, स्वधर्ममा लागेको, प्रजापालनमा तत्पर र लोकप्रिय) आचरण गर्ने राजाले यसलोकमा सुख र परलोकमा स्वर्ग प्राप्त गर्दछ ।

**स्वे स्वे कर्मण्यभिरतः संसिद्धिं लभते नरः॥**

आआफ्नो कर्ममा लाग्नाले नै मानिसले सफलता वा विशिष्टता हासिल गर्दछ ।

**चोराँश्च कण्टकाँश्च सततं विनाशयेत्॥**

राजाले चोरहरू र समाजका काँडाहरूलाई निरन्तर नाश गरिरहनू ।

## अहिंसालक्षणो धर्मः ॥५६१॥

अहिँसा धर्मको लक्षण हो ।

व्याख्याः मानिसहरू "अहिंसा परमो धर्मः" लाई जीव हिंसासँग मात्र तुलना गर्दछन् । तर मन, वचन र कर्मले आफ्नो तथा अरुको आत्मालाई पीडा नदिनु भनेको नै अहिंसा हो भनिएको छ । यस अर्थमा आत्माले "नगर, हुन्न" भनेको कुरा गर्नुलाई पनि हिंसा नै मानिएको छ । आजकल त अचम्मका विचार देखिन्छन् । मानिस मार्नुभन्दा जनावर मार्नु ठूलो पाप हो जसरी कराएको देखिन्छ ।

## स्वशरीरमपि परशरीरं मन्यते साधुः ॥५६२॥

सत्पुरुषहरू आफ्नो शरीरलाई पनि अर्काको शरीर सरह मान्ने गर्दछन् ।

## स्वशरीर (मपि) मिव परशरीररं मन्यते साधुः ॥

सज्जनहरु अर्काको शरीरलाई पनि आफ्नो शरीर सरह मान्दछन् ।

## सर्वत्र मान्यं भ्रंशयति बालिशः ॥

मूर्ख वा पतित वा भ्रष्टाचारी वा दुष्टहरू सज्जनको लोकप्रियताबाट तर्सन्छन् र कुनै पनि उपायले उसलाई आफूजस्तै बनाउन खोज्दछन् ।

## मांसभक्षणमयुक्तं सर्वेषाम् ॥५६३॥

मासु मानिसको आहार बन्न लायक पदार्थ होइन ।

## न संसारभयं ज्ञानवताम् ॥५६४॥

ज्ञानीजनका लागि संसारमा दुःख र भय हुँदैन ।

**विज्ञानदीपेन संसारभयं निवर्तते ॥५६५॥**

ज्ञानीजन ब्रह्मज्ञान मार्फत आफूलाई सांसारिक बन्धनमा फस्नबाट जोगाउने गर्दछन् ।

**सर्वमनित्यं भवति ॥५६६॥**

सम्पूर्ण भौतिक जगत् अनित्य अर्थात् नाशवान् हुन्छ ।

**स्वदेहे देहिनां मतिर्महती ॥**

शरीरधारी जीवलाई आफ्नो शरीरप्रति अति नै आशक्ति हुने गर्दछ ।



**कृमिशकृन्मूत्रभाजनं शरीरं पुण्यपापजन्महेतुः ॥५६७॥**

कीरा, मल एवं मूत्रको भाँडो यो शरीर पुण्य र पाप कमाउने कारण बन्ने गर्दछ ।

**जन्ममरणादिषु दुःखमेव ॥५६८॥**

जन्म, मरण आदिमा दुःख नै दुःख हुन्छ ।

**तपसा स्वर्गमाप्नोति ॥५६९॥**

तपस्या गर्नाले स्वर्ग पाइन्छ ।

**ब्राह्मणस्य तपो ज्ञानं, तपः क्षत्रस्य रक्षणम् ।**
**वैश्यस्य तु तपो वार्ता तपः शूद्रस्य सेवनम् ॥**

ज्ञान आर्जन गर्नु र बाँढ्नु ब्राह्मणको तपस्या हो । सर्वत्र सत्यलाई रक्षा गर्नु क्षत्रियको तपस्या हो । धर्मानुकूल ब्यापार-व्यवसाय गरी देशको आय बढाउनु वैश्यको तपस्या हो । यी तिनै थरीको तपस्यालाई (विगत लामो समयदेखि गलत तरिकाले व्याख्या गर्दै आएको तिनको शरीरलाई सेवा गर्नु होइन) सहयोग गर्नु शूद्रको तपस्या हो ।

**क्षमायुक्तस्य तपो विवर्धते ॥५७०॥**

क्षमाशील व्यक्तिको तपस्या (वा शक्ति) बढ्दछ ।

**तस्मात् सर्वेषां कार्यसिद्धिर्भवति ॥५७१॥**

त्यसबाट (तपस्याबाट) सबै खालका कार्य सफल हुन्छन् ।

इति चाणक्यसूत्राणि

बागमती अञ्चल, काभ्रेपलाञ्चोक जिल्ला, अनैकोट गा.वि.स., वडा नं.३, चारघर टोलमा जन्म भई सोही अञ्चल, काठमाडौं जिल्ला, गोकर्णेश्वर नगरपालिका, वडानं.७, दक्षिणढोकामा बसोबास गर्ने मोहन प्रसाद सापकोटाद्वारा गरिएको चाणक्यसूत्रको नेपाली भावानुवाद पूर्ण भयो ।

सबैको सधैं कल्याण होस् !